# आर्य मञ्जुश्री नामसंगीतिमा पञ्चज्ञानको अवधारणा

# THE CONCEPT OF PAÑCAJÑĀNA IN ĀRYAMAÑJUŚRĪNĀMASAṄGĪTI



प्रकाशक

नेपाल परम्परागत बौद्धधर्म संघ

नकबहिल, ललितपुर

११३१

"सर्व प्रकारं जगतो हिताय"

# आर्य मञ्जुश्री नामसंगीतिया
# पञ्चज्ञानया अवधारणा

# THE CONCEPT OF PAÑCAJÑĀNA
# IN
# ĀRYAMAÑJUŚRĪNAMASAṄGĪTI


लेखक

प. हेराकाजी बज्राचार्य

सम्पादक

डा. भद्ररत्न बज्राचार्य





प्रकाशक

नेपाल परम्परागत बौद्धधर्म संघ

नकवहिल, ललितपुर

११३१

**प्रकाशक**

नेपाल परम्परागत बौद्धधर्म संघ

नकवहिल, ललितपुर

**आर्थिक सहयोग :**

परम्परागत बचत तथा ऋण सहकारी संस्था लि

न्याखाचोक, ललितपुर

**प्रकाशन मिति:**

बु. सं. : २५५४

ने. सं. : ११३१ कछलाथ्व सप्तमी

वि. सं. : २०६७ कार्त्तिक २७ गते शनिवार

**प्रथम संस्करण :**

१००० प्रति

**सहयोग स्वरूप :**

मूल्य रु. १५०/- मात्र

**आवरण चित्र :**

आर्य नामसंगीति (१५ औं शताब्दी)

राष्ट्रिय संग्रहालय, छाउनी

ISBN No.: 978-9937-2-2834-3

**लेआउट/कभर डिजाइन:**

ग्राफिक गार्डेन, बवरमहल

**मुद्रण :**

डि.एल. प्रिण्टर्स, मो.नं.: ९८४१-६०९०५७

त्रिभुवन विश्वविद्यालय

# बौद्ध अध्ययन केन्द्रीय विभाग

विभागीय प्रमुखको कार्यालय

कीर्तिपुर, काठमाडौं, नेपाल



प. सं.

मिति: २०६७/७/८

विषय: **हार्दिक बधाई तथा शुभकामना ।**

'आर्यनामसंगीति' एक गम्भीर विषय मात्रै नभइकन नेपालको बौद्धधर्मको एक विशेषता पनि हो । नेपाल मण्डलको अन्य क्षेत्रमा भन्दा विशेषत ललितपुरमा आर्य नामसंगीतिको ध्वनि गुञ्जायमान भइरहेको हुन्छ । अफ आर्यनामसंगीति पर्वको प्रचलनले त ललितपुर नगरलाई नामसंगीतिपुर भनेर भन्दा पनि अत्योक्ति नहोला ।

प्रस्तुत ग्रन्थ 'आर्यमञ्जुश्री नामसंगीतिमा पञ्चज्ञानको अवधारणा' बौद्ध अध्ययन विषयमा हेराकाजी बज्राचार्यले स्नातकोत्तर डिप्लोमा तहमा अध्ययन गर्दा मेरै निर्देशनमा शोध गर्नु भएको शोधकार्यको फल हो । त्यसपछि उहाँले स्नातकोत्तर तह पनि उत्तीर्ण गर्नु भएको र बौद्ध अध्ययन केन्द्रीय विभाग त्रिभुवन विश्वविद्यालयमा अध्यापन कार्य पनि थाल्नु भएको थियो । तर उहाँको असामाहिक निधनले गर्दा एक बौद्ध विद्वानको कमी हामी सबैले महशुस गरिराखेका छौ भन्ने कुरामा दुइमत नहोला । उहाँको निधन पश्चात मात्रै भएता पनि उहाँको कृति यस ग्रन्थ विद्वान डा. भद्ररत्न बज्राचार्यज्यूबाट सम्पादन भई परम्परागत बचत तथा ऋण सहकारी संस्था लि. को आर्थिक सहयोगमा नेपाल परम्परागत बौद्धधर्म संघ केन्द्रीय कार्यालय, नकवहिल, ललितपुरबाट आफ्नो नवौं वार्षिक सभाको पुनित उपलक्ष्यमा प्रकाशन हुनु सान्दर्भिक एवं सह्रानिय मान्नु पर्दछ । तसर्थ सम्पादक, आर्थिक सौजन्य र प्रकाशकलाई यस कार्यको लागि हार्दिक बधाई दिंदै भविष्यमा पनि नेपालको बौद्धधर्म सम्बन्धि आधिकारीक एवं पठनीय लेख ग्रन्थ आदि सम्पादन, प्रायोजन एवं प्रकाशनको निरन्तरताको लागि पनि हार्दिक शुभकामना व्यक्त गर्दछु ।

सह-प्राध्यापक डा. नरेशमान बज्राचार्य

पूर्व विभागीय प्रमुख

फोन नं.: ४३३३१६२, e-mail: cdbstu@mail.com.np

Govt. Regd. 330/50/51



लोटस रिसर्च सेन्टर
LOTUS RESEARCH CENTRE
(Estd. 1988 A.D.)

Ref. no.:

# सम्पादकीय

प्रस्तुत पुस्तक स्व. हेराकाजी वज्राचार्यले बौद्ध अध्ययन विष्यक पि.एच.डि. तहको अधययन पूरा गर्न तयार पार्नु भएको शोधकार्य हो । लोटस रिसर्च सेन्टरको कार्य समितिमा सदस्य-सचिव भएर लामो समयसम्म आफ्नो अमूल्य समय दिई नेपाल मण्डलको बौद्ध संस्कृतिलाई संरक्षण, सम्वर्द्धन तथा निरन्तर रूपमा विकास गर्दै लाने कार्यमा अनुकरणीय योगदान दिनु भएका स्व. हेराकाजी वज्राचार्यलाई वि. सं. २०५६ सालमा त्रिभुवन विश्वविद्यालय, वौद्ध अध्ययन विभागमा नियमित विद्यार्थी भई अध्ययन गर्न यस सेन्टरले आवश्यक सहयोग प्रदान गरेको थियो । बौद्ध धर्म, साहित्य, संस्कृति आदिको अध्ययन अनुसन्धान तथा अध्यापन कार्यमा टेवा पुऱ्याउने योग्य जनशक्ति उत्पादन होस् भन्ने उद्देश्यले लोटस रिसर्च सेन्टरले आफ्ना सम्पर्कमा रहेका युवाहरूलाई वौद्ध अध्ययनमा अभिरूची जगाउने तथा अध्ययन अध्यापन कार्यमा उत्प्रेरित गर्ने आफ्नो उद्देश्य अनुरूप नै वौद्ध अध्ययन विषयक एम.ए. तहको अध्ययन गर्न स्व. वज्राचार्यलाई आर्थिक सहयोग प्रदान गरी उत्साहित वनाएको थियो । उहाँको असामयिक निधनले उहाँवाट धर्म संस्कृतिका निमित्त हुन सक्ने योगदानवाट हामी वञ्चित हुनु परेको छ । तर पनि आफ्नो जीवनकालमा अनेक, लेख, रचना प्रकाशन गरेर मात्र होइन, बौद्ध पण्डित दिव्यवज्र वज्राचार्यज्यूले संस्कृत भाषावाट नेपालभाषमा अनुवाद गर्नु भएका नवग्रन्थ मध्ये गण्डव्यूहसूत्र, प्रज्ञापारमितासूत्र, दशभूमिकसूत्र, गुह्यसमाजतन्त्र आदिको सम्पादन गरी उहाँले सेन्टरको गरिमा वढाउने कार्य गर्नु भएको छ । उहाँका "यशोधर महाविहार" "यलया बौद्ध विहार" आदि नेपालमण्डलको बौद्ध

P. O. Box No. 59, Khwayebahil, Lalitpur, Nepal Phone: 55-49343/ 016216073 Email : info@LRCnepal.org
Website: http://www.LRCnepal.org

धर्म संस्कृतिको गरीमा उजागर गर्ने कृतिहरू हुन् भने, प्रस्तुत शोध ग्रन्थ नेपालमण्डलको बौद्ध संस्कृतिको केन्द्रविन्दु, बौद्ध सभ्यताको प्रतीक पञ्चबुद्धमा केन्द्रित छ । नेपाली बौद्धहरूले विहान देखि बेलुकी सम्म उच्चारण गरिरहने, जन्मे देखि मृत्युपरान्त सम्मका कर्मकाण्ड, उत्सव, समारोहका वेला प्रदर्शन, चित्रण गर्ने र मुकुटमा सजाई पहिरने पञ्चबुद्ध र पञ्चज्ञानको विषयमा साहित्यिक र अनुसन्धात्मक शैलीको यस शोधकार्य उहाँले गर्नु भई पञ्चवुद्धको महिमालाई उजागर गर्न सफल हुनुभएको छ ।

स्व. वज्राचार्यले यो शोधकार्य प्रा.डा. श्री नरेशमान वज्राचार्यको सुपरिवेक्षणमा सम्पन्न गर्नुभएको थियो । शोधकार्य छाप्ने प्रस्ताव अघि सार्नु हुँदा भाई खेमराज शाक्यलाई आफ्नो तर्फबाट हुन सक्ने सहयोग प्रदान गर्ने वचन दिएको थिए । स्व. हेराकाजी वज्राचार्यले तयार गर्नुभएको शोधकार्यमा साधारण केही सम्पादन मात्र गरी यो पुस्तकको रूपमा प्रस्तुत गरिएको छ । यो पुस्तक प्रकाशनमा ल्याउनुभएकोमा नेपाल परम्परागत बौद्धधर्म संघ, नकबहिल, ललितपुरलाई हार्दिक धन्यवाद दिन चाहन्छु । यस प्रकाशनले नेपालमण्डलको बुद्धधर्मको संरक्षण र सम्वर्द्धनमा योगदान पुग्नेछ भन्ने विश्वास लिएको छु ।

मितिः २०६७/७/९ मंगलबार

डा. भद्ररत्न वज्राचार्य
अध्यक्ष, लोटस रिसर्च सेन्टर, ललितपुर

जि.प्र.का.ल.पु.द.नं. ७०२३/०६०/६१ फोन नं ५५५३१२१

"सर्व प्रकार जगतो हिताय"



नेपाल परम्परागत बौद्धधर्म संघ
Nepal Traditional Buddhist Association
नकबहिल, ललितपुर-१६
स्थापना: २०५८

मिति: वि.सं.२०६७ असोज १५

पत्र संख्या:

# प्रकाशकीय

नेपालको परम्परागत बौद्ध धर्म र संस्कृतिको संरक्षण तथा सम्बर्द्धन गर्ने लक्ष्यले स्थापित नेपाल परम्परागत बौद्धधर्म संघले विगत नौ बर्ष देखि आफ्ना लक्ष्य अनुरुप कार्यहरु प्रस्तुत गरिँदै आइरहेको छ । यसै प्रसंगमा यस संघबाट आयोजित चकसम्बर अभिषेक, षड्क्षरी लोकेश्वर अभिषेक, सप्तविधानोत्तर ध्यान प्रशिक्षण, सामूहिक चूडाकर्म, लोकेश्वर पूजा र लोकेश्वरको साप्ताहिक ध्यान आदि उल्लेखनीय छन् । यस अतिरिक्त नेपालमण्डलको बौद्ध संस्कार र तत्सम्बन्धित केही पुस्तकहरुको पनि प्रकाशन गरिसकेको छ । यसै कममा नेपालमण्डलको बौद्ध समाजमा अति प्रचलित आर्य मञ्जुश्री नामसंगीतिको विषयमा लिखित पुस्तक प्रकाशन गर्न पाउदा हामी सबै गौरवान्वित भएका छौं ।

प्रस्तुत पुस्तक श्री हेराकाजी वज्राचार्यज्यूबाट Post Graduate Diploma in Buddhist Studies अध्ययनको सिलसिलामा उक्त तहको पाँचौं पत्रको रुपमा तयार गरिएको *"आर्यमञ्जुश्री नामसंगीतिमा पंचबुद्धको अवधारणा"* विषयक शोधपत्र को परिमार्जित स्वरुप हो । हाल उहा लेखक हाम्रो सामु नभएता पनि उहाले यस शोधपत्र तयार गरी पुऱ्याउनु भएको अविस्मरणीय योगदानको कदर गर्दै उहाँको सुगतिको कामना गर्दछु साथै उहाँको परिवारलाई पनि पुस्तक प्रकाशनार्थ नैतिक सहयोग दिनु भएकोमा हार्दिक साधुवाद प्रकट गर्दछु ।

आर्य नामसंगीति नेपालमण्डलको बौद्ध समाजमा अत्यन्त प्रचलित र लोकप्रिय गाथा हो । यहाको विहार तथा घरघरमा यसको पाठ गर्ने चलन अद्यापि विद्यमान छ । नामसंगीति बास्तवमा के हो भन्ने कुरो नामसंगीतीको अन्तिमबाक्यको आधारमा थाहा पाउन सकिन्छ । नामसंगीतिको अन्तमा " *आर्य मायाजालषोडशसाहस्रिकान्महायोगतन्त्रान्त पाति समाधिजाल पटलाद् भगवतो श्री शाक्यमुनिना भाषिता भगवतो मञ्जुश्रीज्ञानकायसत्वस्याद्वय परमार्थ नामसंगीतिः परिसमाप्ता* " भन्ने बाक्य उल्लेख छ । यस बाक्य अनुसार नामसंगीतीको देशना शाक्यमुनिबुद्धबाट भएको थियो । नामसंगीति १६००० श्लोक भएको

मायाजालमहायोगतन्त्र अन्तर्गतको समाधिजालपटलबाट निकालिएको हो र यो मञ्जुश्रीज्ञानकायसत्वको अद्वयरुपी परमार्थ नामलाई संगीतबद्धगरी बनाइएको गीत हो ।

मञ्जुश्रीज्ञानसत्वको अद्वयरुपी परमार्थ नामहरु नामसंगीतिमा ८१२ प्रकारका नामहरु छन् । यी मध्ये एक नामको रुपमा आदिबुद्ध रहेको छ । यसबाट मञ्जुश्रीज्ञानसत्वलाई आदिबुद्धको रुपमा पनि लिइएको थाहा हुन्छ । उत्पति तथा प्रारम्भ नभएको, अन्त पनि नभएको र निश्चित अवधिको पनि नभएको ज्ञान नै आदि बुद्ध हो जुन क्लेशावरण र ज्ञयावरण बाट मुक्त हुन्छ । जुन अनादिकाल देखि रहिआएको छ । यो कुरो नामसंगीतिको प्रत्यवेक्षणा गाथा अन्तर्गतको एक श्लोकले देखाएको छ ।

*अनादिनिधनो बुद्ध आदिबुद्धो निरन्वयः*

*ज्ञानैकचक्षुरमलो ज्ञानमूर्ति स्तथागत :*

यहाँ आदिबुद्धलाई अनादिनिधनो बुद्ध भनिएको छ जसको अर्थ शुरु पनि नभएको र अन्त पनि नभएको भनिएको हो । जुन धर्मकाय स्वभावको र पूर्णतया निर्मल हुन्छ ।

मञ्जुश्रीज्ञानसत्वलाई आदिबुद्धको रुपमा अध्येषणा ज्ञान गाथाको दशौं श्लोकमा पनि उल्लेख छ । उक्त श्लोकमा "मञ्जुश्री ज्ञानसत्वस्य ज्ञानमूर्ते स्वयम्भूवः" भनी लेखिएको छ । जस अर्थ मञ्जुश्री ज्ञानसत्वको ज्ञानमूर्ति भनेकै स्वयम्भू हो । स्वयम्भूको अर्थ स्वत उत्पन्न हो । जसको आदि अन्तको स्वभाव हुदैन् अतः यसलाई पनि आदिबुद्धको रुपमा लिने गरिन्छ । अतः नामसंगीतिमा मञ्जुश्रीज्ञानसत्वलाई आदिबुद्धको रुपमा लिइएको स्पष्ट हुन्छ ।

नामसंगीतिमा एक रोचक सन्दर्भ प्रसंग धर्मधातुबागीश्वरमण्डलको प्रसंगलाई लिन सकिन्छ । जुन मण्डल नेपालका प्रायजसो प्राचीन बौद्ध विहारहरुमा रहेका हुन्छन । स्वयम्भूपुराण अनुसार मञ्जुदेवाचार्यले धर्मधातुबागीश्वर मण्डलको रचना गरी धर्मश्रीमित्रलाई दिक्षा दिएका थिए त्यसपछिमात्र द्वादशाक्षरको दार्शनिक पक्षको वारेमा बताएका थिए । आर्य नामंसगीतिको पञ्च तथागतस्तुति गाथाको अन्तिम बाक्यमा "......... गगनामल सुपरिशुद्ध धर्मधातु ज्ञानगर्भ.." शब्द रहेको छ । यसलाई गगनामलसुपरिशुद्धधर्मधातुज्ञानगर्भ मण्डलको रुपमा लिइएको छ । जुन मण्डल पछि आएर धर्मधातुबागीश्वर मण्डलको नाममा बढी प्रचलनमा आएको थियो । अभयकरगुप्तको निष्पन्नयोगाबली नामक पुस्तकमा धर्मधातु मण्डलको विषयमा स्पष्ट ब्याख्या भएको पाइन्छ । जुन मण्डल गगनामलसुपरिशुद्धधर्मधातुज्ञानगर्भ

मण्डलबाट लिइएको हो । मञ्जुश्रीकीर्तिबाट लिखित गगनामलसुपरिशुद्धधर्मधातुज्ञानगर्भ मण्डलको आधारमा हेर्ने हो भने धर्मधातु वागीश्वर मण्डलको पूर्वरुप गगनामलसुपरिशुद्धधर्मधातुज्ञानगर्भ हो भन्ने कुरा स्पष्ट हुन्छ । (Sudan Shakya, Esoteric Buddhist Studies: Identity in Diversity, 2006)

नेपालमण्डलमा प्राचीनकाल देखि नै सर्वसत्व प्राणीहरुको हितार्थ नामसंगीतिको पाठ गर्ने चलन रहिआएको देखिएता पनि यसको ऐतिहासिक तथा दार्शनिक पक्षलाई समेतेर लेखिएको पुस्तक नेपाली भाषामा पाइदैंन । लेखकले आफ्नो शोधपत्रमा नामसंगीतिको दार्शनिक तथा त्यसका विविधपक्षलाई सरलभाषामा विश्लेषण गरिएको छ । अतः यो पुस्तकले नामसंगीति विविध पक्षलाई उजागर गर्ने महत्वपूर्ण भूमिका खेल्नेछ भनी आशा लिएका छौं ।

यस शोध प्रबन्धपत्रलाई पुस्तकको रुपमा ल्याउन आवश्यक गहन जिम्मेदवार बहन गरी, आबश्यक सम्पादन गरी उल्लेखनीय भूमिका निभाउनु भएकोमा श्री डा. भद्ररत्न वज्राचार्यज्यू प्रति पनि हार्दिक कृतज्ञता ज्ञापन गर्दछु । साथै पुस्तकको पाण्डुलिपि तयार गरिदनु भएकोमा लोटस रिसर्च सेन्टर प्रति पनि आभार प्रकट गर्दछु । यो पुस्तक प्रकाशनमा ल्याउन दत्तचित्त भईलाग्नु भएका यस संघका कार्यकारी सदस्य श्री खेमराज शाक्यज्यूलाई हार्दिक धन्यवाद ब्यक्त गर्न चाहन्छु । उहाले यति प्रयास नगरेको भए शायद यो शोधपत्र पुस्तकको रुपमा पाठकसमक्ष आउने थिएन होला । यस अतिरिक्त पुस्तक प्रकाशनको लागि आवश्यक आर्थिक सहयोग गरी अमूल्य सहयोग पुऱ्याउन भएकोमा परम्परागत वचत तथा ऋण सहकारी संस्था लि.लाई हृदय देखि साधुवाद दिन चाहन्छु यसका साथै यस पुस्तकको सम्पूर्ण पाण्डुलिपि टाइपगर्ने शान्ति वज्राचार्य, चित्रकार सुरेन्द्र शाक्य र नैतिक सहयोग गर्ने नामसंगीति खलः (नेपाल परम्परागत बौद्ध धर्म संघ), कभर तथा ले-आउट डिजाइन भूषण कपाली र पुस्तकको छपाई कार्यगर्ने प्रेस परिवारलाई पनि हार्दिक धन्यवाद दिन चाहन्छु । त्यसरी नै पुस्तकको प्रकाशनार्थ प्रत्यक्ष तथा अप्रत्यक्ष रुपमा सहयोग गर्नुहुने सम्पूर्ण महानुभावहरु प्रति पनि आभार प्रकट गर्दछु । यस पुस्तक प्रकाशनको पुण्यफलले सवैसत्व प्राणीहरुको उद्धार होस । शुभम्

माणिकरत्न शाक्य "मणीश"
महासचिव

द.नं.: ५०४/०६५/०६६ "परम्परा बचतको, बचत सुरक्षित भविष्यको" फोन: ५५५५३२४

(सहकारी ऐन २०४८ बमोजिम स्वीकृत)



**परम्परागत बचत तथा ऋण सहकारी संस्था लि.**

न्याखाचोक, ललितपुर

स्था: २०६५ मिति: २०६७/७/५ शनिवार

PARAMPARAGAT SAVING & CREDIT CO-OPERATIVE LTD., NYAKHACHOWK, LALITPUR-16

## दुई शब्द

नेपाल परम्परागत बौद्धधर्म संघद्वारा सञ्चालित लोकेश्वर पूजा उपसमितिका ९ जना सदस्यहरू मिलि वि.सं. २०६४ साल फागुन २१ गते देखि परम्परागत बचत समूह सञ्चालन गरी आइरहेको थियो । बचत समूहको आर्थिक कारोवारलाई इमान्दारी र पारदर्शि बनाउन सहकारी ऐन २०४८ बमोजिम ललितपुर डिभिजन सहकारी कार्यालयमा वि.सं. २०६५ साल मंसिर २५ गते विधिवत रूपमा परम्परागत बचत तथा ऋण सहकारी संस्था लिमिटेड दर्ता गरी निरन्तर सेवा प्रदान गरी आइरहेको छ । संस्थाका विविध गतिविधिहरूमध्ये धार्मिक कार्यक्रम पनि एक हो । धार्मिक कार्यक्रम अन्तर्गत सर्वप्रथम भगवान सिद्धार्थ गौतमबुद्ध जीवनी सित सम्बन्धीत तीर्थस्थलमा यस संस्थाबाट वि.सं. २०६६ पौष १६ देखि पौष २७ गते ( १२ दिन) सम्म बौद्ध चारधाम तीर्थयात्रा सफलतापूर्वक सम्पन्न गरीएको थियो । यस धार्मिक कार्यक्रमबाट प्राप्त रकम मध्ये नेपाल परम्परागत बौद्धधर्म संघको नवौ वार्षिक साधारण सभाको उपलक्ष्यमा दिवंगत बौद्ध विद्वान एवं लेखक पं. हेराकाजी बज्राचार्यबाट तयार गरिएको शोधपत्र 'आर्य मञ्जुश्री नामसंगीतिमा पञ्चदानको अवधारणा' पुस्तकको रूपमा प्रकाशित गर्नको लागि आर्थिक सहयोग गर्न पाउँदा हामी ज्यादै गौरवान्वित भएका छौ ।

साथै आर्य मञ्जुश्री नामसंगीति सम्बन्धि अध्ययन अनुसन्धान गर्ने विद्यार्थीहरू तथा नामसंगीति प्रेमीहरूलाई यस पुस्तकबाट ज्ञान हासिल गर्ने सहयोग पुग्नेछ भनी आशा गर्दछु ।

खेमराज शाक्य

अध्यक्ष



१. श्रीआदिबुद्ध मञ्जुश्री



२. श्रीमञ्जुश्रीज्ञानसत्व



३. श्रीवज्रखड्गमञ्जुश्री



४. श्रीप्रज्ञाज्ञानमञ्जुश्री



५. श्रीवागीश्वरमञ्जुश्री



६. श्रीवज्रतीक्ष्णमञ्जुश्री



७. श्रीज्ञानकायमञ्जुश्री



८. श्रीअरपचनमञ्जुश्री

# विषय - सूची

# आर्यमञ्जुश्रीनामसंगीतिमा पञ्चज्ञानको अवधारणा

## अध्याय एक
## परिचय

**१.१ विषय प्रवेशः**

महायानी बौद्ध समाजमा बुद्ध, बोधिसत्व लगायत अन्य बौद्ध देवीदेवताहरुको महत्वपूर्ण स्थान छ । यसैले यी विषयहरुसंग सम्बन्धित सूत्र, शास्त्र एवं धारणीहरुका अतिरिक्त बुद्ध बोधिसत्वादिको गुणानुस्मृति झल्कीने विभिन्न प्रकारका स्तोत्र, गाथाहरु वाचन गर्ने प्रचलन छ । महायानीहरुले अहिलेसम्म पनि यसलाई परम्पराकै रुपमा श्रद्धापूर्वक पालना गरी आएका छन् । नेपालमण्डल भित्रका बौद्ध विहारहरुमा यस्ता सूत्र, स्तोत्रादि तथा धारणीहरु मध्ये नामसंगीति पाठ गर्ने चलन निकै लोकप्रिय रहेको पाइन्छ । चैत्य होस् वा नामसंगीतिको मूर्ति वा आर्यावलोकितेश्वरको रथयात्रामा देवताको अगाडि नै किन नहोस् नेवाः बौद्धहरु समुह समुहमा भेला भई नामसंगीति गाथा वाचन गर्दै आएको दृश्य नेपाल उपत्यकामा सहजै देख्न सकिन्छ । यहाँ प्रत्येक वर्ष गुंलाधर्म (श्रावण, भाद्र महिना) मा त नेवाः बौद्धहरुको घर घरमा समेत एक महिनासम्म नामसंगीति गाथा वाचन गरिन्छ । सही अर्थमा भन्ने हो भने बौद्ध परम्परा अनुरुपको चतुर्मास (आषाढ पूर्णिमा देखि कार्तिक पूर्णिमा बीचको अवधि) को प्रारम्भदेखि नै देवस्थान, विहार तथा घरै पिच्छे प्रति दिन साझ विहान गरी त्रिकाल नामसंगीति पाठ भैरहेको हुन्छ । महायानी बौद्ध समाजमा एउटा पवित्र ग्रन्थका रुपमा प्रतिष्ठापित यही नामसंगीति विषयलाई लिएर "आर्यमञ्जुश्रीनामसंगीतिमा पञ्चज्ञानको अवधारणा" शिर्षक अर्न्तगत शोधकार्य तयार गरी यो प्रस्तुतीकरण पेश गरिएको छ ।

**१.२. आर्यनामसंगीति अध्ययनको औचित्य, महत्व तथा उपयोगिता**

आर्यमञ्जुश्रीनामसंगीति बौद्ध तन्त्रसंग सम्बन्धित ग्रन्थ मध्ये विशेषत नेपाल तथा भोट देशमा सर्वाधिक लोकप्रिय ग्रन्थ हो । यो ग्रन्थलाई बुद्ध वचनको रुपमा लिइन्छ । यसैले बौद्ध समाजमा यस्को मान्यता ठूलो छ । बुद्ध वचन भएकै कारणले तिब्बती ग्रन्थ संग्रहमा यसलाई कग्यूर संग्रह अन्तर्गत संग्रहित गरिएको हुनु पर्दछ ।[1] उच्चतम बौद्धदर्शन ज्ञान सम्बन्धी

[1] डा. बनारसि लाल (सं.), *आर्यमञ्जुश्रीनामसंगीति, अमृतकणिका टिप्पणी* (सारनाथ, केन्द्रीय उच्च तिब्बती शिक्षा संस्थान, १९९४) ।

विषयहरु संग्रहित गरीएका हुनाले नै यसको महत्व अत्यधिक भएको हो । मूलरुपमा संस्कृत श्लोकवद्ध गरिएको यस ग्रन्थमा उल्लेखित दर्शनज्ञान श्रीमञ्जुश्रीलाई परिलक्षित गरी वर्णन गरिएको छ । अर्थात् श्रीमञ्जुश्री नै दर्शन ज्ञानको प्रतीकको रुपमा यस ग्रन्थमा प्रस्तुत गरिएको छ । त्यसैले मञ्जुश्री रुपी ज्ञानको नामसंगीति भएको हुनाले यसलाई 'आर्यमञ्जुश्रीनामसंगीति' नामाकरण गरिएको स्पष्ट हुन आउँछ ।

आर्यमञ्जुश्रीनामसंगीतिको अध्ययनबाट ज्ञात हुन आउँछ कि यस ग्रन्थको मूल विषय भनेकै पञ्चज्ञान हो । यो ज्ञान पञ्चतथागत संग सम्बन्धित ज्ञान हो । पञ्चज्ञानलाई विशेष रुपमा अवबोध गर्न सकेको खण्डमा सबै प्राणीको हित गर्न, कल्याण गर्नमा सक्षम भै मुक्ति प्राप्त गर्न सकिने हुन जान्छ ।[2] यस विषयमा नामसंगीतिको टीका तथा व्याख्याहरु रचिनुका कारण खास गरी नामसंगीतिको उपयोगिता तथा यसको गहन दर्शन ज्ञाननै हुन् । नामसंगीतिका ज्ञाता आचार्य विव्दानहरुले थुप्रै यसको टीका उपटीकादि ग्रन्थहरु रचना गरीएबाटै यो ग्रन्थको कति महत्व छ भन्ने कुरा स्पष्ट गर्दछ । नामसंगीतिमा उल्लेखित विषयहरु उच्च दर्शन ज्ञान सम्बन्धी भएको हुनाले यसमा वर्णित शब्द अथवा पदको अर्थ साधारण रुपले मात्र स्पष्ट नहुने, यसको लागि गुरु परम्परा तथा टीकाकार आचार्यहरुको व्याख्या आदिको आधारमा मात्र स्पष्ट हुन आउँदछ । नामसंगीतिमा वज्रयानका प्रायः सबै पारिभाषित शब्दहरु समावेश गरी वर्णन गरिएको हुनाले नै यो ग्रन्थको विशेषता मान्नु पर्ने देखिन्छ ।

नामसंगीतिमा वर्णित मञ्जुश्रीज्ञानसत्वलाई चिन्न र बुझ्नका लागि अद्वयज्ञान लाभ गर्नुपर्दछ । वज्रयानको मूल रहस्य वज्रयोगभित्र समाहित भएका छन् । वज्रयोगबाटै अद्वयज्ञान प्राप्त हुन्छ । त्यसपछि मात्रै साधकले ज्ञानकाय-सहजकाय स्वरुपी मञ्जुश्रीज्ञानसत्वलाई राम्ररी बुझ्न सकिनेछ । उक्त कुरा नामसंगीतिमा वर्णित-प्रत्यवेक्षणा ज्ञान गाथा अन्तरगत ३३-३५ सम्मको 'वज्रसूर्यमहालोको ...... परमाक्षर' पद भित्र वज्रयोगको सम्पूर्ण रहस्य वर्णन गरिएको छ भनि कालचक्रको टीका 'विमलप्रभा' मा व्याख्या गरिएको छ ।[3]

कल्कि पुण्डरीकद्वारा रचित कालतन्त्र टीका 'विमलप्रभा' ग्रन्थ भित्र अत्यधिक रुपमा नामसंगीतिका विभिन्न पदहरु उद्धरण गरिएको छ । उक्त

---

[2] आचार्य विलासवज्र, *आर्यमञ्जुश्रीनामसंगीति टीका, नाममन्त्रार्थावलोकिनी,* (अप्रकाशित ग्रन्थ), प्रतिवचन गाथाबाट ।

[3] प्रा. जगन्नाथ उपाध्याय, (सं. तथा टिप्पणीकार), *विमलप्रभा भाग १* (सारनाथ; केन्द्रीय उच्च तिब्वती शिक्षा संस्थान, १९९४)पृ. ३६ ।

ग्रन्थमा नामसंगीतिलाई महत्व दिई एक प्रकरणमा भनिएको छ -'जसले नामसंगीतिलाई बुझ्दैन् त्यसले वज्रधरको ज्ञानकाय अर्थात् वज्रयानका कुरालाई बुझ्न सकिन्दैन् ।'[4]

त्यस्तै नारोपासिद्ध रचित सेकोद्देश ग्रन्थमा पनि ठाउँ ठाउँमा नामसंगीतिलाई उद्धरण गरिएको छ । साधनामालामा पनि नामसंगीतिका विभिन्न पदहरु उद्धरण गर्नुको साथै नामसंगीतिको पाठ विधि बारे विस्तृत वर्णन गरिएको पाइन्छ ।[5]

नामसंगीतिको ज्ञान आर्जन गर्ने हेतु नेपालमा यसको नित्यपाठ, पूजाको अतिरिक्त यसलाई निरन्तरता दिन विभिन्न गुठीहरुको समेत व्यवस्था गरिएको छ । नेपालमण्डलको नेवाः बौद्ध समाजमा नामसंगीतिलाई संस्कृतिको रुपमा जीवन्तता दिइएको छ ।

नामसंगीतिलाई विस्तृत रुपमा बुझ्न धैर्यताकासाथ अध्ययन गर्नु नितान्त आवश्यक हुन आउँछ । नामसंगीतिका विविध भाषामा अनुवाद भएपनि यसलाई बुझाउने टीकाहरु प्रायः संस्कृत भाषा र तिब्बती भाषामा रहेको हुनाले उक्तभाषाको ज्ञान हुनु आवश्यक हुन आउँछ । अतः नामसंगीतिको बारेमा विस्तृत रुपमा अध्ययन गरी यसको महत्व जन समक्ष प्रस्तुत गर्नु आवश्यक छ । तर नामसंगीति र यस्मा वर्णित पञ्च ज्ञानको विषयलाई लिएर त्यति सन्तोषजनक अध्ययन गरेको पाइन्दैन । यसैलाई दृष्टिगत गरी यो नामसंगीति र त्यसमा उल्लेखित पञ्चज्ञानको बारेमा परिचयात्मक प्रस्तुत गर्नु वाञ्छनिय देखिन आएकोले यसको अध्ययन गरिएको छ ।

### १.३ पुस्तक समिक्षाः

आर्यमञ्जुश्रीनामसंगीति बौद्धतन्त्रग्रन्थहरु मध्येको एउटा प्रसिद्ध ग्रन्थ हो । विशेष गरी महायानी बौद्ध समाजमा यो ग्रन्थको महत्वपूर्ण स्थान छ । यसैले महायानी बौद्ध समाजमा यो ग्रन्थरत्नको नामबाट प्रसिद्ध छ । प्रायः सबै महायानी देशहरुमा आर्यमञ्जुश्रीनामसंगीतिको अनुवाद संस्कृत भाषाबाट आ-आफ्ना भाषाहरुमा भइसकेका छन् । तापनि विशेष गरी नामसंगीति वाचन भने संस्कृत भाषामै गर्ने प्रचलन रही आएकी छ । नेपालमण्डलका बौद्धहरु मूलतः संस्कृत भाषामा रहेको नामसंगीतिको नै वाचन गर्ने परंपरा अझैंपि कायमै छन् । यहाँको चलन अनुसार आजसम्म

---

[4] ऐजन, पृ॰ ५२ ।

[5] विनयतोष भट्टाचार्य (सं.), *साधनमाला भाग १*, बरौदा; ओरियन्टल इन्स्टीच्यूट,१९६८), पृ. १२७, १५९, १६५ ।

पनि हस्तलिखित थ्यासफूमा रहेको आर्यमञ्जुश्रीनामसंगीति गाथालाई प्राथमिकता दिई सश्रद्धा वाचन कार्यमा निरन्तरता दिइ आएको पाइन्छ । यहाँ स्थित धेरैजसो बौद्धविहार, बौद्ध स्थलहरूमा मूल रुपमा हरितालपत्रमा नेपालाक्षर प्रयोग गरिएको हस्तलिखित संस्कृत मूल पाठको नामसंगीति ग्रन्थलाई विशेष स्थान दिइएको र अन्य छापामा रहेका नामसंगीतिलाई सहायक ग्रन्थको रुपमा वाचन गर्दै आइरहेको हामी देख्न सक्छौं । यसैले नामसंगीतिका हस्तलिखित ग्रन्थहरु यहाँका बौद्धविहार लगायत पुस्तकालयहरु एवं व्यक्तिगत संग्रहमा समेत धेरै मात्रामा उपलब्ध छन् ।

आर्यमञ्जुश्रीनामसंगीतिको संस्कृत मूल पाठलाई विभिन्न आधुनिक विद्वानहरुले सम्पादन एवं अनुवाद गरी प्रकाशमा ल्याएका छन् । यसमा सर्वप्रथम आई. पि. मिनोभले नामसंगीतिको सन् १८८५ मा नामसंगीतिको सम्पादन गरी प्रकाशनमा ल्याएका थिए ।[6] त्यसपछि प्रा. रघुवीरले अर्को संस्करण प्रकाशनमा ल्याए ।[7] यसैगरी सन् १९६३ मा श्री दुर्गादास मुखर्जीले पनि सम्पादन गरी नामसंगीतिको अर्को संकरण प्रकाशन गरे ।[8]

नेपालमा पनि विभिन्न समयमा विभिन्न विद्वानहरुबाट नामसंगीतिको सम्पादन एवं अनुवाद गरी प्रकाशनमा ल्याए । यसमा सर्वप्रथम वि. सं. २०१३ मा पं रत्नबहादुर वज्राचार्यले नामसंगीतिको संस्कृत मूलमा नेपाल भाषा अनुवाद सहित प्रकाशनमा ल्याउनु थियो ।[9] पछि वि. सं. २०२६ सालमा भिक्षु धर्मसागरले नामसंगीतिको- अर्थ सहीत अर्को पुस्तक प्रकाशनमा ल्याए ।[10] त्यसैगरी पं दिव्यवज्र वज्राचार्यको वि. सं. २०२९ सालमा अर्को पुस्तक प्रकाशन गर्नु भयो ।[11] वि. सं. २०४४ सालमा संस्कृत मूल पाठ र नेपालभाषा अनुवाद सहितको संस्करण श्री हेमराज शाक्यबाट सम्पादन भई प्रकाशनमा आयो ।[12] सन् १९९३ मा श्री मीनबहादुर शाक्यबाट पनि अर्थ सहितको नामसंगीति ग्रन्थ संपादन गरी प्रकाशमा ल्याउनु भएको

---

[6] I.P. Mineov (Ed.), *Historio Philogical Faculty, vol. 16* (St. Petersburg University, 1885), p.137

[7] Prof. Raghuvir (Ed.), *Shatapitaka Series, vol.18* (New Delhi ; Internationl Academy of Indian Culture,)

[8] Durga Das Mukherji (Ed.), *Aryamanjusri Namasamgiti* (University of Calcutta, 1963)

[9] पं. रत्नबहादुर वज्राचार्य (अनु.), *आर्यनामसंगीति गाथास अर्थ सहीत* (ललितपुर, ने. सं. १०७७)

[10] भिक्षु धर्मसागर (अनु.), *आर्यनामसंगीति अर्थ सहीत* (काठमाडौं, २०२६)

[11] पं. दिव्यवज्र वजाचार्य (सं.), *अद्वयपरमार्था नामसंगीति* (भूषण प्रकाशन, वि. सं. २०२९)

[12] हेमराज शाक्य (सं.), *आर्यनामसंगीति* (काठमाडौ, वि.सं.२०४४)

थियो ।[13] वि.स. २०४६ सालमा श्री महेन्द्ररत्न वज्राचार्यले सम्पादन गरी अर्को नामसंगीति संस्करण प्रकाशमा ल्याए ।[14]

नामसंगीतिगाथाको अंग्रेजी अनुवाद तथा टिप्पणी सहीतको दुई प्रति संस्करण पनि प्रकाशित भएको छ ।[15] त्यस्तै डा. बनारसीलालद्वारा सम्पादित संस्कृत मूलमा रहेको भिक्षु रविश्रीज्ञानको 'अमृतकणिका टिप्पणी' र आचार्य विभूतिचन्द्रको 'अमृतकर्णिकोद्योटन निबन्ध' सहितको नामसंगीति सन् १९९४ मा प्रकाशित भएको छ ।[16]

माथि उल्लेखित संस्करणहरुका अतिरिक्त नामसंगीतिका विषयमा लेखिएका अन्य पुस्तकहरु पनि प्रकाशित छन् । नेपालमा नित्य पाठ गर्नका लागि श्रद्धालु भक्तजनहरुबाट विभिन्न उपलक्ष्यको संस्मरण गरी धेरै संख्यामा नामसंगीति ग्रन्थ प्रकाशित गरेको पाइन्छ । प्रकाशित नामसंगीतिका थुप्रै गन्थहरु मध्ये पनि प्रमाणित एवं अर्थ सहितको नामसंगीतिलाई मात्र लिएर यहाँ व्याख्या गरेको छु ।

नामसंगीतिको ग्रन्थलाई लिएर व्याख्या गरेका अन्य टीका ग्रन्थहरु पनि पाइन्छ । यसमा संस्कृत मूलमा रहेको आचार्य विलासवज्र रचित 'आर्यनामसंगीतिटीकानाम-नाममन्त्रार्थावलोकिनी' ग्रन्थ र भिक्षु मुनिशासन सुमतिद्वारा नेपालभाषा अनुवाद सहीतको 'आर्यनामसंगीतिटीका व्याख्या' ग्रन्थहरू उपलब्ध छन् । यी दुवै ग्रन्थहरू अप्रकाशित छन् ।

नामसंगीतिमा रहेका श्लोकहरु विभिन्न तन्त्र, ग्रन्थका टीकाकार विद्वान् आचार्यहरुले आफूहरुले रचेका विभिन्न ग्रन्थहरुमा धेरै मात्रामा उद्घृत गरेको पाइन्छ । यसरी उद्घृत गरिएका ग्रन्थहरुमा नारोपाको सेकोद्देश, कालचक्र तन्त्रको विमलप्रभा टीका, लघुतन्त्र टीका, अद्वयवज्रका विभिन्न रचना, साधनमालाका विविध साधनाहरु र चर्यागीतिको टीका आदिमा धेरै पाइन्छ ।[17]

यसको साथसाथै नामसंगीतिसंग संबन्धित पञ्चबुद्ध, पञ्चज्ञानका विविध विषय उल्लेखित अन्य ग्रन्थहरु पनि प्रकाशित भएका छन् । यसमा

---

[13] मीनबहादुर शाक्य (सं.), *आर्यमञ्जुश्रीनामसंगीतिसमूल पाठ अर्थ सहित* ( ललितपुर; नागार्जुन इन्स्टिच्यूट अफ बुद्धिष्ट स्टडिज,१९९३)

[14] महेन्द्ररत्न बज्राचार्य (सं.), *आर्यमञ्जुश्रीनामसंगीति गाथा,* (काठमाडौ ,२०४६)

[15] (I) Ronald M. Davidson, *The Linany of Names of Manjusri* (Tantric and Taoist Studies, vol.xx, *Bruxelles 1981)*

(II) Alex Wayman, *Chanting the Names of Manjusri*, (Shambhala, Boston, London, 1985)

[16] डा. बनारसीलाल (सं.), *आर्यमञ्जुश्रीनामसंगीतिस अमृतकणिका टिप्पणी* (सारनाथ केन्द्रीय उच्च तिब्बती शिक्षा संस्थान, १९९४)

[17] डा. बनारसीलाल (सं.), *नामसंगीतिकि अ...यन सामाग्री १*,(धी १, (सारनाथ ; केन्द्रीय उच्च तिब्बती शिक्षा संस्थान, १९८६), पृ. २२ ।

गुह्यादि अष्टसिद्धि संग्रह अन्तर्गतका आचार्य पद्मवज्रको गुह्यसिद्धि र इन्द्रभूतिपादको ज्ञानसिद्धि,[18] आचार्य नरेन्द्रदेवको 'महायान सूत्रालंकार'[19] श्री गुह्यसमाजतन्त्रम्[20] आचार्य चन्द्रकीर्तिको गुह्यसमाज प्रदीपोद्योटन टीका व्याख्या,[21] अद्वयवज्र संग्रह[22] आदि ग्रन्थहरु पर्दछन् ।

माथि उल्लेखित विभिन्न प्रकाशित अप्रकाशित ग्रन्थहरुका अतिरिक्त चिनीया, तिब्बती, मंगोलिया भाषामा पनि अनुवाद गरिएका नामसंगीतिका धेरै ग्रन्थहरु आजसम्म पनि सुरक्षित छन् । यसको अतिरिक्त नामसंगीतिका विषयमा लेखिएका अन्य पुस्तकहरु पनि प्रकाशित छन् । यहाँ नित्यपाठ गर्नका लागि श्रद्धालु भक्तजनहरुबाट विभिन्न उपलक्ष्यको संस्मरण गरी धेरै संख्यामा नामसंगीति ग्रन्थ प्रकाशित गरेको पाइन्छ । यसबारे अरु चर्चा तल यथा स्थानमा हुनेछ ।

### १.४. उद्देश्य

प्रस्तुत शोधकार्य निम्न कुराहरुमा बढी केन्द्रीत गरिएको छ –

१) नामसंगीति ग्रन्थको लोकप्रियताका बारेमा चर्चा तथा उक्त ग्रन्थको रचनाकाल बारे विवेचना गर्ने ।

२) नामसंगीति ग्रन्थभित्र समाहित पञ्चज्ञानबारेमा विश्लेषण र नेवाः बौद्ध समाजमा नामसंगीति ग्रन्थको प्रभाव ।

### १.५. अध्ययन तरिका

आर्यमञ्जुश्रीनामसंगीतिमा समाहित पञ्चज्ञानको बारेमा शोधकार्य गर्नका लागि नासंगीतिको संस्कृत मूलपाठ र सोसंग सम्बन्धित प्रकाशित अप्रकाशित ग्रन्थहरु समेत समावेश गरी अध्ययन गरी कार्य सम्पादन गरेको छु । यसको अतिरिक्त यस शोधकार्य सम्पन्न गर्नका लागि नामसंगीति वाचन कार्यमा संलग्न विभिन्न महानुभावहरुसंग परामर्श गरी आवश्यक जानकारी हासिल गरेको छु । साथै बौद्ध विहारहरुको स्थलगत भ्रमण गरी नामसंगीतिको परम्परागत वाचन कार्यको अवलोकन गरी यसका धार्मिक तथा सांस्कृतिक महत्वको बारेमा पनि जानकारी लिएको छु ।

---

[18] प्रा. सम्दोङ रिम्पोछे, प्रा. व्रजवल्लभ द्विवेदी (सं.) *गुह्यादि अष्टसिद्धि संग्रह* (सारनाथ ; केन्दीय उच्च तिब्बती शिक्षा संस्थान,१९८७),

[19] स्वामी द्वारिकादास शास्त्री (सं.), *महायानसुत्रालंकार* (वाराणसी बौद्ध भारती,१९८५)

[20] स्वामी द्वारिकादास शास्त्री (सं.), श्री *गुह्यसमाजतन्त्रम्* (भारती प्रकाशन, वाराणसी, १९८४)

[21] प्रा. चिन्ताहरण चक्रवर्ती (सं.), *गुह्यसजामप्रदीपोद्योटनटीका व्याख्या* ( पटना, भोटदेशीय संस्कृत ग्रन्थमाला,१९८४)

[22] डा. हरप्रसाद शास्त्री (सं.), *अद्वयवज्र संग्रह* ( बरौदा, गायकवाड ओरियण्टल रिसर्च इन्स्टीच्यूट,१९२७)

नामसंगीति र यसमा समाहित पञ्चज्ञानको अवधारणालाई लिएर प्रकाश पार्नका लागि यस शोधकार्यमा निम्न लिखित विभिन्न चौध अध्यायमा विभाजन गरी अध्ययन गरेको छु ।

क. **प्रथम अध्याय** : यस अध्यायमा नामसंगीतिको परिचय, यस्को औचित्य, महत्व र उपयोगिता देखि लिएर पुस्तक समिक्षा, अध्ययनको उद्देश्य आदिलाई लिएर वर्णन गरेको छु ।

ख. **अध्याय दुई** : यस अध्यायमा नामसंगीति मूल पाठ र सो संग संबन्धित टीका ग्रन्थको आधारमा नामसंगीतिको शब्दार्थको बारेमा चर्चा गरेको छु ।

ग. **अध्याय तीन** : यस अध्यायमा नामसंगीतिसंग सम्वन्धित विभिन्न ग्रन्थादिको आधारमा नामसंगीतिको रचनाकाल, प्रकाशित अप्रकाशित ग्रन्थहरुको बारेमा चर्चा परिचर्चा सहीत ऐतिहासिक विवेचना गरेको छु ।

घ. **अध्याय चार** : यस्मा नामसंगीतिको प्रतिकात्मक स्वरुपका विभिन्न आर्यमञ्जुश्रीको ध्यान वर्णन तथा सोको दार्शनिक विवेचना प्रस्तुत गरेको छु ।

ङ. **अध्याय पाँच** : यस अध्यायमा आर्यमञ्जुश्रीनामसंगीति ग्रन्थमा उल्लेखित विभिन्न चौध परिच्छेदमा उल्लेखित विषयवस्तुलाई समेटी ग्रन्थको परिचय प्रस्तुत गरेको छु ।

च. **अध्याय छ** : यस अध्यायमा नेवाः बौद्ध समाजमा नामसंगीतिको महत्व, यस्को वाचन, नियम, विधि, रितिथिति गुठी आदिको बारेमा विभिन्न उपशीर्षक सहित वर्णन गरेको छु ।

छ. **अध्याय सात** : यस अध्यायमा पञ्चबुद्धको स्वभाव, ज्ञान र सोसंग सम्बन्धित विभिन्न ग्रन्थादि र नामसंगीतिमा उल्लेखित पञ्चज्ञानको बारेमा वर्णन गरेको छु ।

ज. **अध्याय आठ** : यस अध्यायमा नामसंगीति र सोसंग संबन्धित पञ्चज्ञानको बारेमा उपसंहार प्रस्तुत गरेको छु ।

# अध्याय दुई
# आर्यमञ्जुश्रीनामसंगीतिको शब्दार्थ

## आर्यमञ्जुश्रीनामसंगीति शब्दार्थ

दुई छुट्टाछुट्टै शब्द 'नाम' र 'संगीति' को संयोजनबाट बनेको शब्द नामसंगीति हो । बौद्ध आचार्यहरुले यी शब्दहरुको भिन्नाभिन्नै अर्थ लगाएको पाईन्छ । उदाहरणका निमित्त आचार्य विलासवज्रले नामसंगीतिको टीका 'नाममन्त्रार्थावलोकिनी' ग्रन्थमा 'संगीति' शब्दको अर्थ स्पष्ट पार्दै नामसंगीति शब्दको अर्थ यसरी लगाउनु भएको छ –

*"गानं गीतिःसम्यग्गीति संगीतिः,*
*नाम्ना संगीतिर्नामसंगीतिरिति"* ।

अर्थात्

गान नै गीति हो, सम्यक् तरिकाले गाइएको गीति नै संगीति हो । त्यसैले नामहरुको सम्यक् गीतिनै नामसंगीति हो ।

विलासवज्रको भनाई अनुसार अर्थात् क्रिया,चर्या,योग,तन्त्र, सूत्र, अभिधर्म, विनय, समस्त लौकिक लोकोत्तर, स्थावर-जङ्गम जगत् सबै नाम हुन् र त्यसको संगीति नै नामसंगीति हो ।[22a]

नामसंगीति शब्दको अर्थ व्याख्या गर्दै अर्का आचार्य रविश्रीले "नाना तन्त्रहरुबाट उपलक्षित, महासुखाकार र सहजानन्द स्वरुपी सम्यक् ज्ञान नै नामसंगीति हो" भनेर 'अमृतकणिका'मा उल्लेख गर्नुभएको छ –

*"नानातन्त्रोपलक्षितमहासुखाकारसहजानन्दसुखस्य नाम्नां सम्यग्ज्ञानं नामसंगीतिः"* [23]

'नामसंगीति' मञ्जुश्री ज्ञानसत्वको नाम संग्रह हो । यसमा वज्रयानको सबै गुह्य पारिभाषिक शब्दहरुको वर्णन गरिराखेकोले यो ग्रन्थको विशेष महत्व छ । यसलाइ मन्त्रयानको आधारशीला पनि मानिन्छ । मन्त्रयान सिद्धान्त अनुसार यो सकल चल अचल जगत नै मन्त्र

---

22a *"नामानि योगक्रियाचर्यातन्त्र- प्रवचनसुत्राभिधर्मविनयलौकिकलोकोत्तराणि स्थावरजङ्गमानि च, तेषा नाम्नां संगीतिरिति"* पूर्वोक्त टिप्पणी नं २ ।

23 पूर्वोक्त टिप्पणी नं १, पृ. ९

हो । यसैले एकक्षणाभिसम्बोधि, पञ्चाकाराभिसम्बोधि, विंशत्याकारासम्बोधि, मायाजालाभिसम्बोधि आदि जस्ता धेरै नै शब्दको वर्णन नामसंगीतिमा परेको हो ।

नामसंगीति ग्रन्थलाई मञ्जुश्रीज्ञानसत्वको रुपमा लिइएको पाइन्छ । ज्ञानसत्व मञ्जुश्रीको विभिन्न नामको संगीति वर्णन गरिएको हुनाले नै नामसंगीतिलाई 'आर्यमञ्जुश्रीनामसंगीति' भनेको हो । नामसंगीतिलाई मञ्जुश्री नामसंगीतिको साथ साथै परमार्थ नामसंगीति पनि भनिन्छ । नामसंगीतिको उपसंहार गाथाको अन्तमा *परमार्थ नामसंगीति परिसमाप्ता* भनेर यसलाई परमार्थ नामसंगीति भनेर उल्लेख गरेको पाईन्छ । त्यस्तै नामसंगीतिलाई 'अद्वयपरमार्थ नामसंगीति' को रुपमा पनि वर्णन गरेको पाइन्छ ।[24]

नामसंगीतिमा ज्ञानसत्व मञ्जुश्रीको विभिन्न ८१२ नाम विशेषणको रुपमा वर्णन भएको छ । यी विभिन्न नामहरुको संगीतिलाई 'आर्यमञ्जुश्रीनामसंगीति' नामाकरण गरिएको स्पष्ट हुन्छ ।

[24] पूर्वोक्त टिप्पणी नं १, पृ. १०९ ।

# अध्याय तीन

## आर्यमञ्जुश्रीनामसंगीतिको ऐतिहासिक पृष्ठभूमि

बुद्ध वचनमा आर्यमञ्जुश्रीनामसंगीतिको उल्लेख परेको छ वा छैन भन्ने विषयमा विद्वानहरु बीच मत भिन्नता रहेको पाईन्छ । थेरवाद बुद्धधर्ममा आस्था राख्ने विद्वानहरुले आर्यमञ्जुश्री-नामसंगीतिलाई बुद्ध वचनका रुपमा स्वीकारेको पाईन्दैन । बुद्धको निर्वाणको धेरै समयपछि मात्र यो ग्रन्थ तयार भएको कुरा उनीहरु उल्लेख गर्छन् । तर, महायानी बौद्ध ग्रन्थहरुमा भने बोधिज्ञान प्राप्तिपछि बुद्धले तीन पटक धर्मचक्र प्रवर्तन गर्नुभएको कुरा उल्लेख परेको छ । जस अनुसार,

१) वाराणसीको सारनाथ मृगदावनमा चतुआर्य सत्यलाई लिएर भएको पहिलो धर्मचक्र प्रवर्तन ।

२) तीक्ष्ण बुद्धि भएकाहरुलाई शून्यताज्ञानसमावेश भएको प्रज्ञापारमितालाई लिएर गृधकूट पर्वतमा गर्नुभएका दोश्रो धर्मचक्र प्रवर्तन । र

३) सत्व प्राणिहरुको कल्याणार्थ सम्यक् सम्बुद्धत्व प्राप्त हुने मन्त्रयानको मन्त्रनयको विषयलाई लिएर श्रीधान्यकटक पर्वतमा गर्नु भएको तेश्रो धर्मचक्र प्रवर्तन ।

माथि उल्लेखित तीन धर्मचक्र प्रवर्तन मध्ये तेश्रो धर्मचक्र प्रवर्तन बारे बौद्ध तन्त्र ग्रन्थहरुमा ठाँउ ठाँउमा उल्लेख परेको छ । कालचक्र तन्त्रको टीका विमलप्रभाका टीकाकार पुण्डरीकले मन्त्रनयको देशना तथागतले बोधिप्राप्तिको बाह्रौ मास चैत्र पूर्णिमाको दिन धान्यकटक पर्वतमा दिनु भएको कुरा लेखेका छन् । आर्यमञ्जुश्रीनामसंगीतिका टीकाकार रविश्रीले पनि भगवान् बुद्धले चैत्र पूर्णिमाको दिन नाना तन्त्रहरु श्रवण गर्न इच्छुक विनयेजनहरुको अध्येषणामा श्रीधर्मधातु वागीश्वर मण्डलमाथि श्रीआदिबुद्ध विराजमान गराई सोही दिन बृहत् एवं लघुतन्त्रको भेद बारे देशना गर्नुभएको थियो भनेर उल्लेख गरेको पाईन्छ ।[25] बृहदादि बुद्धमा पनि

[25] श्री धान्यकटके महाचैत्यस्थाने नानातन्त्रश्रवणार्थिभिरण्येषित: श्री शाक्यसिंहो नाम बुद्धो भगवान् चैत्रपूर्णिमायां श्रीधर्मधातु वागीश्वरमण्डलं तदुपरि श्रीमान्नक्षत्रमण्डलमादिबुद्ध विस्फार्य तत्र तस्मिनेव दिने बुद्धाभिषेक दत्वा देवादिभ्य: सर्व मन्त्रनीति बृहल्लघुतन्त्रभेदेन देशियवान् (पृ. १) आफ्नो ग्रन्थ अमृतकणिका नाम आर्यनासंगीति टिप्पणीमा ।

शास्ताले गृध्रकुटमा प्रज्ञापारमितानयको र श्रीधान्यकटकमा मन्त्रनयको धर्मदेशना गर्नु भएको कुरा उल्लेख गरिएको छ -

*गृध्रकूटे यथा शास्ता प्रज्ञापारमितानये ।*
*तथा मन्त्रनये प्रोक्ता श्री धान्ये धर्मदेशना ॥*[26]

यसबाट श्रीधान्यकटक पर्वतमा भगवान् बुद्धले तन्त्रनय सम्बन्धी धर्मदेशना गर्नु भएको बेलामा श्रीधर्मधातुवागीश्वर मण्डल माथि विराजमान भई आर्यमञ्जुश्रीनामसंगीति तन्त्रको पनि देशना गर्नुभएको थियो भन्ने थाहा हुन्छ । नामसंगीति गाथामा वर्णन भए अनुसार गुह्याधिपति वज्रपाणि आदि जिनपुत्रहरुको अध्येषणामा शास्ताले उक्त तन्त्रको धर्मदेशना गर्नुभएको थियो ।

बौद्ध दर्शनको मूल सार समाहित नामसंगीतिको दर्शन ज्ञान अति गहन छ । यसमा वर्णित प्रत्येक नामको दार्शनिक महत्व छ तथा यी नामहरु साधनारत भई सिद्धि प्राप्त गर्नु पर्ने विषयमा पर्छन् । यसैले आर्यमञ्जुश्रीनामसंगीति तन्त्रको महत्व अरु तन्त्र ग्रन्थहरुको भन्दा धेरै भएको पाईन्छ । सबै तन्त्रहरुको सार नै नामसंगीति भएको हुनाले यसलाई 'अद्वय परमार्थ नामसंगीति' भनेर पनि नामसंगीति तथा अन्य ग्रन्थहरुमा उल्लेख भएको पाईन्छ ।

नामसंगीतिलाई बुद्ध वचन मानिन्छ । नामसंगीतिगाथाको अन्तिम पुष्पिका वाक्यले यसलाई बुद्ध वचनको रुपमा पुष्टिगर्न खोजिएको छ -

*भगवन्तथागत श्रीशाक्यमुनिना भाषिता भगवतो मञ्जुश्रीज्ञानसत्वस्यपरामार्था नामसंगीतिः परिसमाप्ता ।*[27]

यसरी नै नामसंगीतिको अध्येषणा गाथाको बाह्रौं श्लोकमा अतीतकालमा पनि बुद्धहरुले नामसंगीतिको धर्मदेशना गरिजानु भएको, वर्तमानकालमा पनि नामसंगीतिको धर्मदेशना गरिरहनुभएको तथा अनागतकालमा पनि नासंगीतिको फेरि-फेरि धर्मदेशना गरिरहने छ भनि उल्लेख गरिएको छ -

*यातीतैर्भाषिता बुद्धैर्भाषिष्यन्ते ह्यनागताः ।*
*प्रत्युत्पन्नाश्च सम्बुद्धा यां भाषन्ते पुनःपुनः ॥१२॥*[28]

---

[26] पूर्वोक्त टिप्पणी नं. १, पृ. १ ।
[27] पुर्वोक्त टिप्पणी नं. १, पृ. १०९ ।
[28] पुर्वोक्त टिप्पणी नं. ९, पृ. ८ ।

यसबाट बुद्धहरुबाट तीनै कालमा नामसंगीति विषयमा धर्मदेशना दिई आउनु भएको कुरा थाहा हुन्छ । यसैले नामसंगीतिलाई बुद्ध वचन भनिएको हो । यो कुरा तिब्बती त्रिपिटकको सूत्रपिटक अर्थात् कन्जुरमा उल्लेख छ । यस्तो परमार्थ मञ्जुश्रीज्ञानसत्वको विषय भएको गम्भिरातिगम्भिर नामसंगीतिलाई लिएर विभिन्न बौद्ध आचार्यहरुबाट समय समयमा टीका, उपटीकाहरु रचना भै रहनु आश्चर्यको कुरो होईन् । इतिहासलाई पल्टाएर हेर्ने हो भने इशाको छैठौं, सातौं शताब्दीदेखि बाह्रौं तेह्रौं शताब्दीका आचार्यहरुबाट नामसंगीतिका २६ वटा भन्दा बढी टीका टिप्पणीहरु लगायत नामसंगीतिसंग सम्वन्धित साधना, मण्डल, अभिषेक, विधि आदि विविध विषयहरुमा ५० औं ग्रन्थहरु रचना भएको पाईन्छ । यसरी एउटै ग्रन्थरत्नलाई लिएर यतिका धेरै टीका उपटीका आदि रचना भएबाट पनि नामसंगीति अति विशिष्ट ग्रन्थमा पर्छ भन्ने कुरा स्पष्ट हुन्छ ।

### ३.१. आर्यमञ्जुश्रीनामसंगीतिको रचनाकाल

नामसंगीति तन्त्र ग्रन्थको रचनाकाल बारे यकिनका साथ उल्लेख गर्न सकिन्दैन । यसरी नै यो ग्रन्थलाई पद्यात्मक शैलीबाट कसले र कहिले रचना गरे यकिनसाथ भन्न गाह्रो छ । अतः नामसंगीतिको काल निर्धारण गर्ने सम्बन्धमा विद्वानहरु बीच मत भिन्नता रहेको पाइन्छ । एकथरी विद्वानहरु यसको रचना ईशाको तेश्रो-चौथो शताब्दीमा भएको मान्छन् भने अर्को थरी विद्वानहरु नामसंगीतिमा बौद्धतन्त्रको सार समाहित भएकाले यसको रचना सातौं-आठौं शताब्दीतिर भएको विश्वास गर्छन् ।

पाठशैलीको दृष्टिकोणबाट हेर्ने हो भने नामसंगीतिगाथाको रचना पाँचौं शताब्दीतिर भएको अनुमान गर्न सकिन्छ । प्राचीन टीकाकार आचार्यहरुका आधारबाट यसको रचनकाल निर्धारण गर्न मद्दत मिल्छ । नामसंगीतिका प्राचीन टीकाकार आचार्यहरुमा आचार्य चन्द्रगोमिन्, विमलमित्र, विलासवज्र, डोम्बिहेरुक, मञ्जुश्रीमित्र आदि पर्न आउँछन् ।[29] यी आचार्यहरु मध्ये आचार्य चन्द्रगोमिन्लाई नामसंगीतिको प्रथम टीकाकारको रुपमा लिइन्छ । उहाँ छैठौं-सातौं शताब्दीका आचार्य मानिन्छ । उहाँबाट *"आर्यमञ्जुश्री नामसंगीतिमहाटीका"* को रचना भएको थियो । त्यसैले सो समयभन्दा अगाडि आर्यमञ्जुश्रीनामसंगीतिको रचना भैसकेको स्वतः सिद्ध हुन आउँछ । अतः कालको दृष्टिकोणले नामसंगीतिका टीका ग्रन्थहरु मध्ये यो सबै भन्दा प्राचीन टीका ग्रन्थ हो ।[30]

---

[29] पूर्वोक्त टिप्पणी नं. १६, पृ. २२०, २२१ ।
[30] ऐजन, पृ. २२० ।

नामसंगीतिका अन्य टीकाकारहरु मध्ये नालन्दाका आचार्य चन्द्रगोमिन् (ई. ६३५) समस्त बौद्धतन्त्र र शास्त्रका महान ज्ञाता मानिन्छ। उहाँ व्याकरण र नामसंगीतिका प्रशिद्ध विद्वान कहलिएका थिए। आचार्य चन्द्रगोमिन् आचार्य चन्द्रकीर्तिका समकालिन थिए। यी आचार्यहरु छैथौं-सातौं शताब्दीका हुन् ।[31] नालन्दाका आचार्य चन्द्रकीर्तिले आचार्य चन्द्रगोमिन्लाई कुन कुन ग्रन्थहरुको बारेमा ज्ञान छ भनी प्रश्न गर्दा आचार्य चन्द्रगोमिन्ले आफुलाई व्याकरण र नामसंगीतिको मात्र ज्ञान भएको उत्तर दिएका थिए।[32] यसबाट आचार्य चन्द्रकीर्तिलाई आचार्य चन्द्रगोमिन् समस्त तन्त्र एवं शास्त्रका ज्ञाता हुन भन्ने कुरा थाहा पाउन खास गाह्रो भएन। यसबाट सबै तन्त्रहरुको सार नै नामसंगीति हो भन्ने कुरा ज्ञात हुन्छ।

नामसंगीतितन्त्र पञ्चज्ञानसंग सम्वन्धित ग्रन्थ हो। पञ्चज्ञान पञ्चबुद्धसंग सम्बन्धित छ। विनयतोष भट्टाचार्यका अनुसार महायान बौद्धग्रन्थ मध्ये प्रसिद्ध ग्रन्थ 'गुह्यसमाज तन्त्र' चौथो शताब्दीमा रचना भएको हो। उक्त ग्रन्थमा पञ्चबुद्धको दार्शनिक पक्षलाई लिएर विवेचना गरिएको पाइन्छ। नामसंगीतिको मूल विषय पनि पञ्चबुद्धकै पञ्चज्ञान भएको हुनाले यी दुबै ग्रन्थ एउटैं कालमा रचना भएको हुन सक्ने प्रवल सम्भावना छ।

पञ्चबुद्धलाई पञ्चज्ञानका प्रतिकका रुपमा मान्ने नेपाली बौद्ध समाजको संस्कृति अति प्राचीन छ। लिच्छवि राजा वृषदेव (इ.सं.३८६-४२५) को पालामा गोदावरीमा पञ्चबुद्धका मूर्तिहरु स्थापना भएको वंशावलीमा वर्णन गरिएको छ। यसबाट पञ्चबुद्धका मूर्तिहरु लिच्छविकालदेखि नै नेपालमा निर्माण भै आएको संकेत मिल्छ।[33] वृषदेवपछिका अन्य लिच्छवि राजाहरुका पालामा पञ्चबुद्धका मूर्ति एवं पञ्चबुद्धसंग सम्बन्धीत चैत्यहरु निर्माण भै रहेको चर्चा अन्य लिच्छवि अभिलेखहरुबाट पनि पुष्टिन्छ।[34]

महायानी ग्रन्थ 'आर्यमञ्जुश्री मूलकल्प' बाट पनि नामसंगीतिको प्राचीनता बारे अध्ययन गर्न थप बल मिल्छ। नामसंगीतिलाई 'मञ्जुश्री

---

[31] ऐजन, पृ. २२०।
[32] पूर्वोक्त टिप्पणी नं. १, पृ. (XIII)।
[33] *राजभोगमाला वंशावली*, प्राचीन नेपाल, सं. ८, पृ. ६।
[34] हेमराज शाक्य, *चैत्यया आत्मकथा* -ललितपुर, २०५०), पृ. १७।

ज्ञानसत्व' को रुपमा लिइन्छ, त्यसकारण यसलाई आर्यमञ्जुश्री नामसंगीति नामाकरण गरिएको हो भनेर माथि चर्चा भई सकेको छ । त्यसैले आर्यमञ्जुश्री मूलकल्पको रचना नामसंगीतिको रचनाकालभन्दा पछिको हो भन्ने कुरा यसबाट स्पष्ट हुन्छ । तर T W Rys आर्यमञ्जुश्री मूलकल्प ग्रन्थको रचनाकाल इशाको दोश्रो तेश्रो शताब्दी सम्ममा भएको मान्नुहुन्छ ।[35] तर अरु बौद्ध विद्वानहरु भने यस ग्रन्थको रचना इशाको पाँचौं-छैठौं शताब्दीमा भएको विश्वास गर्छन् ।

माथिको विवरणबाट इशाको चौथो शताब्दी सम्ममा आएर नेपाली संस्कृतिको रुपमा लोकप्रिय बनिसकेको पञ्चबुद्धको मूर्ति र मञ्जुश्रीसंग आबद्ध आर्यमञ्जुश्री मूलकल्प ग्रन्थको रचना इशाको दोश्रो-तेश्रो देखि पाँचौं-छैठौं शताब्दी सम्ममा भएको देखापर्न आउँछ । यसबाट इशाको चौथो शताब्दीभन्दा अगाडि नै नामसंगीतिको रचना भएको अनुमान सहजै गर्न सकिन्छ ।

नेपाल उपत्यकाको संदर्भमा कुरा गर्ने हो भने इशाको छैठौं-सातौं शताब्दीतिर निर्माण भएका यहाँका चैत्यहरुमा पञ्चतथागतहरु देखा पर्न थालिसकेको छ । Neils Gutschow ले आफ्नो पुस्तक *The Nepalese Chaitya 1500 years of Buddhist Votive Architecture in Kathmandu valley* मा यसरी उल्लेख गर्नु भएको छ -

The Tathagatas first appear on the chaitya of the $6^{th}$ and $7^{th}$ Centuries as the example of vabaha (or Ombaha) representing an early and mature verson[36]

नामसंगीतिको प्राचीनता यस्को परम्परागत प्रवाहबाट पनि स्पष्ट हुन्छ । स्वयम्भूपुराणको षोदश अध्यायमा विक्रमशील महाविहारका महापण्डित ज्ञानश्रीमित्रलाई नामसंगीतिको व्याख्याकारको रुपमा प्रस्तुत गरिएको छ । आठौं शताब्दीका मानिने पण्डित ज्ञानश्रीमित्रले नामसंगीतिको धर्मदेशना गरेको समय नामसंगीतिका ज्ञाता महाचीनका मञ्जुदेवाचार्य कहाँ गएका थिए । मञ्जुदेवाचार्यले पनि ज्ञानश्रीमित्रलाई नेपालमण्डलमा बसी

---

35 T. W. Rys. Daris, *Buddhism* (London, 1912), पृ. १७ ।

36 Neils Gutschow, *The Nepalese Chaitya 1500 years of Buddhist Votive Architecture in Kathmandu Valley*, (London, 1971), p. 32.

द्वादशाक्षरको गुह्यार्थ र वाह्यार्थ स्पष्ट गर्नु भएको थियो ।" यसबाट नामसंगीतिको व्यापकता आठौं शताब्दी सम्ममा आएर भारतबाट महाचीनसम्म पुगेको र महाचीनमा मञ्जुदेवाचार्य जस्ता धुरन्धर नामसंगीतिका व्याख्याकारको उदय भइसकेकोले नामसंगीति ग्रन्थको रचना निकै पहिले भई सकेको अनुमान गर्न सकिन्छ ।

[37] ह्यूवर्ट डिक्लेर, *स्वयम्भू पुराण सम्बन्धि निगू प्रकरण : धर्ममित्र सु ख:, शान्तिकराचार्य सु ख: ?* । नेपालमण्डलया बौद्ध संस्कृति सम्मेलन प्रतिवेदन,१११९, सं. प्रा. डा. वज्रराज शाक्य, महापाल, लोटस रिसर्च सेन्टर, २०५६), पृ. ६९ ।

# अध्याय चार

## आर्यमञ्जुश्रीनामसंगीतिका प्रकाशित अप्रकाशित ग्रन्थहरु

### ४.१. आर्यमञ्जुश्रीनामसंगीतिका पाण्डुलिपिहरु

आर्यमञ्जुश्रीनामसंगीतिका पाण्डुलिपिहरु ताडपत्र, भुजापत्र, हरितालपत्रादिमा विश्वका विभिन्न पुस्तकालयहरुमा संग्रहित छन् । नेपालमा भने यस्ता थुप्रै पाण्डुलिपिहरु व्यक्तिगत संकलनमा रहेका छन् । यहाँका बौद्धस्तोत्र संग्रहमा पनि नामसंगीति पाठ समावेश गरिएको पाईन्छ । यी सवैको यथार्थ विवरण दिनु यहाँ सम्भव छैन् । नेपाल जर्मन अभिलेख संरक्षण योजनाले संकेत गरे अनुसार ललितपुर, भक्तपुर, कीर्तिपुर, काठमाडौंका स्थानीय व्यक्तिहरुको सकलनमा विभिन्न पत्रमा लेखिएका नामसंगीतिका ८८ वटा पाण्डुलिपि, ग्रन्थहरु संरक्षित देखिन्छन् ।[38]

नामसंगीतिका अन्य पाण्डुलिपिहरुमा Cambridge University Library मा सातवटा, न्यू योर्क स्थित The Insitute of Advance Studies of World Religions मा microfilm गरिएका ताडपत्रमा लेखिएका दुई पाण्डुलिपि सुरक्षित छन् ।[39] Prof. S. Matsunami अनुसार Tokyo University Library मा मात्र ९ वटा नामसंगीतिका पाण्डुलिपि संग्रहित छन् ।[40]

माथि उल्लेखित विभिन्न पाण्डुलिपिहरु मध्ये केशर पुस्तकालयमा संग्रहित ने.सं. २४२ (सन् ११२२) को ताडपत्रमा लिपिवद्ध नामसंगीति सवैभन्दा प्राचीन मानिन्छ । यसरी नै ने.सं. ३५१ (सन् १२३१) मा ताडपत्रमा लेखिएको नामसंगीति अर्को पाण्डुलिपि नेपाल राष्ट्रिय अभिलेखालयमा संकलित छ । यी पाण्डुलिपि ग्रन्थहरु ने.सं. ८०० देखि ने.सं. १००० बीचमा सारिएका देखिन्छन् ।[41]

### ४.२. आर्यमञ्जुश्रीनामसंगीतिका टीका उपटीका तथा अन्य परिवार ग्रन्थहरु

आर्यमञ्जुश्रीनामसंगीतिका विभिन्न समयमा लेखिएका टीकाहरु भेटिन्छन् । आचार्य विद्वानहरुद्वारा बिभिन्न समयमा रचना भएका त्यस्ता टीकाहरु मध्ये ४ वटा संस्कृत भाषामा लिपिवद्ध छन् । ती हुन्

---

38 पूर्वोक्त टिप्पणी नं. १३, पृ. (I) ।

39 ऐजन,

40 ऐजन, पृ. (II)

41 पूर्वोक्त टिप्पणी नं. १, पृ. (xxii) ।

१) आचार्य विलासवज्रको *'नाममन्त्रार्थावलोकिनीनाम नामसंगीतिटीका',*

२) आचार्य रविश्रीको *'अमृतकणिका नामसंगीति टिप्पणी',*

३) आचार्य विभूतिचन्द्रको अमृतकणिका नामसंगीति टिप्पणीलाई लिएर रचना गरिएको *'अमृतकणिकोद्योत निबन्ध'*।

४) रोयल एशियाटिक सोसाइटीमा संग्रहित *'गूढपदा'* नामक टीका ।

आर्यमञ्जुश्रीनामसंगीतिका टीका तथा त्यसको व्याख्या आदि तिब्बती भाषामा अनुवाद गरी तन्यूर संग्रहमा राखिएका छन् । त्यस्ता ग्रन्थहरुमा २६ वटा टीका, १२ वटा साधना, ९ वटा भावना एवं उपदेश, १६ वटा मण्डल विधि, ३ वटा होम विधि र ९ वटा अभिषेकादि सम्वन्धी गरी जम्मा ७५ ग्रन्थहरु देखा पर्छन् ।[42] तन्यूरसंग्रहमा आर्यमञ्जुश्रीनामसंगीतिका टीका ग्रन्थ तथा टीकाकारहरुको विवरण दिइएको छ ।[43] विवरणहरु परिशिष्टमा संलग्न गरिएका छन् ।

### ४. ३. नामसंगीतिको भाषानुवाद

नामसंगीतिको लोकप्रियता यसको विभिन्न भाषामा अनुवादहुनुबाट पनि छर्लङ्गिन्छ । प्राप्त विवरण अनुसार नामसंगीतिको पाँच विभिन्न भाषामा अनुवाद भइसकेको छ । नेपालभाषाका अलावा यो ग्रन्थको अनुवाद तिब्बती, मंगोलिया, चीनीया, अंग्रेजी आदि भाषाहरुमा भई सकेको छ । यसबारे संक्षिप्तमा चर्चा हुनु प्रासांगिक हुनेछ ।

### क) नेपाल भाषामा अनुवाद

आर्यमञ्जुश्रीनामसंगीति मूल संस्कृतबाट नेपाल भाषामा अनुवाद भएका तीनवटा ग्रन्थहरु छन् । यस्का अनुवादकहरु पं. रत्नबहादुर वज्राचार्य (ई. १९५७), भिक्षु धर्मसागर (ई.१९६९) र भिक्षु मुनिशासन सुमति हुन् । यी मध्ये भिक्षु मुनिशासन सुमतिद्वारा अनुवादित 'आर्यमञ्जुश्रीनामसंगीति टीका व्याख्या' नामक ग्रन्थ प्रकाशित भएको छैन । भिक्षु मुनिशासनले विमलप्रभा नामक आर्यमञ्जुश्रीनामसंगीतिको टीका ग्रन्थको पनि अनुवाद गर्नुभएको थियो । उक्त ग्रन्थको केहि खण्ड श्रीमहेन्द्ररत्न वज्राचार्यको सम्पादनमा

---

[42] ऐजन,

[43] पूर्वोक्त टिप्पणी नं. १, पृ. (xxii-xxiv) ।

श्रीधर्मधातु-वागीश्वर प्रकाशन मण्डल, नेपालबाट सन् १९८९ मा प्रकाशित भै सकेको छ ।

**ख) तिब्बती अनुवाद**

आर्यमञ्जुश्रीनामसंगीतिको तिब्बती भाषामा विभिन्न समयमा अनुवाद कार्य भई आएको देखिन्छ । तिब्बती भाषामा अनुवादित आर्यमञ्जुश्रीनामसंगीतिलाई 'आर्यमञ्जुश्रीज्ञानसत्वस्य परमार्था नामसंगीति भनिन्छ ।[44] यस्ता अनुवादहरु पनि समय समयमा संशोधन भई रहन्छन् । bLo Gros brTan pa ले नामसंगीतिको संस्कृत भाषामा अनुवाद गर्नुभएको कुरा पेकिङ्ग संस्करण कन्यूरमा उल्लेख छ । पछि bLo Gros brTan pa द्वितीयले यसको संशोधन गरेका थिए । त्यस्तै देगे संस्करण अनुसार कमलगुप्त र रिन्छेन जङ्पो (Rinchen Bzan-Po) (ई.९५८-१०५५)ले तिब्बती भाषामा अनुवाद गरेका थिए[45] भने यस अनुवादित ग्रन्थलाइ पछि bLo Gros brTan Pa ले संशोधन गरेका थिए ।[46]

**ग) मंगोल भाषामा अनुवाद**

नामसंगीतिको मंगोलभाषामा सर्वप्रथम Choi giodzer (ई.१२१४-१२९४)ले अनुवाद गरेका थिए ।[47]

**घ) चीनीया भाषामा अनुवाद**

Yuen dynasty (ई.१२८०-१३६८) का Khwun ले नामसंगीतिको पहिलो पटक चीनीभाषामा अनुवाद गरेका थिए । प्राप्त सूचिपत्र अनुसार नामसंगीति मूल प्रतिलिपिको चीनीया भाषामा चारवटा अनुवाद भै सकेको छ ।[48]

**ङ) अंग्रेजी अनुवाद**

---

44 पूर्वोक्त टिप्पणी नं. १, पृ. (xx) ।

45 Prof. Ui, Hakuju, Prof. Suzuki, Munetada, Prof. Kanakura, Yenhho, Prof. Tokantada(comp.), *A Complete catalogue of the Tibetan Buddhist Canon*, (Emperial University, Sendai, Japan, 1934)

46 पूर्वोक्त टिप्पणी नं. १, पृ. (xx)

47 Buddhism in Mangolia, p. 9-10.

48 A Complete Catalogue of Chinese Translation of Buddhist Tripitaka, (B. Nanjio, p.227-306, records No. 1032.

नामसंगीतिको अंग्रेजी भाषामा अनुवादित दुई ग्रन्थहरु छन् । यसका अनुवादकहरु Ronald M. Davidson र Alex wayman हुन् ।[49]

## ४.४. नामसंगीतिको सम्पादित प्रकाशित ग्रन्थहरुबारे एक सर्वेक्षण

मूल पाठ सहित आर्यमञ्जुश्रीनामसंगीति ग्रन्थलाई सम्पादन सहित विभिन्न विद्वानहरुले समय समयमा प्रकाशित गरी आएका छन् । यस्का संपादकहरुका सूचिमा रुसी विद्वान I.P. Mine av को नाम अग्र पंक्तिमा देखा पर्छन् ।[50] सन् १८८५ मा वहाँले नामसंगीतिको संस्कृत मूलपाठ सम्पादन गरी प्रकाशनमा ल्याएका थिए । वहाँले सम्पादन कार्य सम्पन्न गर्न अन्य धेरै पाण्डुलिपिहरुको आधार लिनु भएको थियो ।[51]

I.P. Mine av पछि पण्डित रत्नबहादुर वज्राचार्यको नाम अग्रपंक्तिमा देखा पर्छ । वहाँले आर्यमञ्जुश्रीनामसंगीतिको अनुवाद सहित संपादन गर्नु भएको भयो ।[52] वहाँले आफ्नो प्रकाशनमा नामसंगीतिको संस्कृत मूलपाठ र त्यसको नेपालभाषामा भावार्थ अनुवाद पनि समावेश गर्नु भएको छ । यसका निमित्त वहाँले विलासवज्रको 'नाममन्त्रार्थावलोकिनी नामसंगीतिटीका' (अप्रकाशित) ग्रन्थको आधार लिनु भएको थियो । नामसंगीतिको षट्चक्र अनुशंसा अध्याय वहाँको ग्रन्थमा समावेश तहुनुबाट यो कुरा स्वतः स्प्रष्ट हुन्छ । वहाँको ग्रन्थलाई आधारमा बनाई पछि अन्य संस्करणहरु प्रकाशित हुन थाले ।

नामसंगीतिको अर्को संस्करण प्रो. रघुवीरले सम्पादन गरी प्रकाशनमा ल्याए ।[53] उक्त संस्करणमा वहाँले रञ्जना, तिब्बती, चिनीया, मंगोल तथा देवनागरी लिपि समेत समेटी प्रकाशन गर्नुभएको छ ।

वि.सं. २०२० सालमा दुर्गादास मुखर्जीको सम्पादनमा कलकत्ता विश्वविद्यालयबाट नामसंगीतिको अर्को संस्करण प्रकाशनमा आयो ।[54] यसरी नै वि. सं. २०२६ सालमा भिक्षु धर्मसागरले अर्थ सहितको नामसंगीति

---

[49] पूर्वोक्त टिप्पणी नं. १५, (I & II)
[50] पूर्वोक्त टिप्पणी नं. ६
[51] पूर्वोक्त टिप्पणी नं. १६, पृ. २३२
[52] पूर्वोक्त टिप्पणी नं. ९,
[53] पूर्वोक्त टिप्पणी नं. ७,
[54] पूर्वोक्त टिप्पणी नं. ८,

सम्पादन गरी अर्को संस्करण प्रकाशनमा ल्याए ।[55] नामसंगीतिलाई नेपालभाषामा अनुवाद गर्न वहाँले भिक्षु मुनिशासन सुमतिको अप्रकाशित 'आर्यमञ्जुश्रीनामसंगीतिटीका (व्याख्या)' को आधार लिनु भएको थियो ।

यसैगरी २०२९ सालमा पं. दिव्यवज्र वज्राचार्यको सम्पादनमा नामसंगीतिको अर्को प्रकाशन निस्क्यो ।[56] यस पुस्तकमा वहाँले नासंगीतिको षट्चक्र अनुशंसा समेतको संस्कृत पाठ समावेश गर्नुभएको छ । पुस्तकमा वहाँले नेपालभाषमा नामसंगीतिको परिचय, पञ्चतथागतको ज्ञान, षट्कुलको संक्षिप्त वर्णनगरी नामसंगीतिमा उल्लेखित षट्चक्र र प्रज्ञाचक्रको प्रतिकात्मक स्वरुपका विभिन्न मञ्जुश्रीका चित्र एवं तिनीहरुका ध्यान वर्णन बारे चर्चा गर्नु भएको छ ।

नामसंगीतिको अर्को संस्करण हेमराज शाक्यको सम्पादनमा वि. सं. २०४४ सालमा प्रकाशनमा आयो ।[57] यो संस्करण तयार पार्न वहाँले पं. रत्नबहादुर वज्राचार्यको अनुवादलाई नै मूल आधार बनाउनु भएको छ । वहाँले आफ्नो संस्करणमा आर्यनामसंगीतिको साथै ताराशतनाम स्तोत्र र आर्य भद्रचरी प्रणिधानको संस्कृत पाठ र यसको नेपालभाषा अनुवाद समेत समावेश गर्नु भएको छ ।

नामसंगीतिको अर्को संस्करण मीनबहादुर शाक्यले २०५० सालमा प्रकाशनमा ल्याउनु भयो ।[58] वहाँको संस्करणमा नामसंगीतिको षट्चक्र अनुशंसाको मूलपाठ सहित त्यसको नेपालभाषा अनुवाद समावेश गरिएको छ । वहाँले भिक्षु मुनिशासन सुमतिको अप्रकाशित ग्रन्थ 'आर्यमञ्जुश्रीनामसंगीति टीका (व्याख्या)'लाई आधार बनाई अनुवाद कार्य सम्पन्न गनु भएको थियो ।[59] यसरी नै वहाँको संस्करणमा पं. रत्नबहादुर वज्राचार्यले तयार पार्नु भएको आर्यमञ्जुश्री नामसंगीतिमा उल्लेखित ८०० विभिन्न मन्त्राक्षरको शब्दार्थ पनि समावेश गरिएको छ । यसैगरी यस ग्रन्थमा नासंगीतिका विविध पक्षलाई समेटेर अंग्रेजी भाषामा चर्चा गरिएको छ ।

---

55 पूर्वोक्त टिप्पणी नं. १०,
56 पूर्वोक्त टिप्पणी नं. ११,
57 पूर्वोक्त टिप्पणी नं. १२,
58 पूर्वोक्त टिप्पणी नं. १३,
59 पूर्वोक्त टिप्पणी नं. १३

वि.सं. २०४६ सालमा श्रीमहेन्द्ररत्न वज्राचार्यले पनि नामसंगीति ग्रन्थ सम्पादन गरी प्रकाशनमा ल्याउनु भयो ।[60] यस संस्करणमा नामसंगीतिको मूलपाठ र भिक्षु मुनिशासन सुमतिद्वारा अनुवादित आर्यमञ्जुश्रीनामसंगीति टीकाको प्रथम अध्येषणादेखि चतुर्थ मायाजालाभिसंबोधि सम्मको श्लोक पनि समावेश गरिएको छ ।

पछि बनारसीलालले २०५१ सालमा आर्यमञ्जुश्रीनामसंगीति अमृतकणिकाटीका' नामक ग्रन्थ सम्पादन गरी प्रकाशनमा ल्याउनु भयो ।[61] यस ग्रन्थमा आर्यमञ्जुश्रीनामसंगीतिको मूलपाठ सहित भिक्षु रविश्रीज्ञानद्वारा रचित 'अमृतकणिका टिप्पणी' तथा उक्त टिप्पणी माथि आचार्य विभूति चन्द्रद्वारा रचित 'अमृतकणिकोद्योटन निबन्ध' उपटीका समेत समावेश गरीएको छ । संस्कृत मूलको यस ग्रन्थमा सम्पादकले हिन्दीभाषामा नामसंगीतिको जानकारी मूलक भूमिका पनि लेख्नु भएको छ ।

नामसंगीतिको अंग्रजी संस्करणहरु पनि प्रकाशित छन् । नामसंगीतिको अनुवाद सहितको संस्करण रोनाल्ड एम. डेविडसनले १९८१ मा 'दि लिटानि अफ नेम्स अफ मञ्जुश्री' नामबाट प्रकाशित भएको पाइन्छ ।[62] नामसंगीतिका वभिन्न संस्करणहरु लगायत केहि भोट पाठ टीकाहरुको सहायतालिई वहाँले यो संस्करण सम्पादन गर्नुभएको थियो ।[63] अंग्रेजी अनुवाद सहितको अर्को संस्कृत प्रो. एलेक्स वेमेनले 'च्यान्टीङ दि नेम्स अफ मञ्जुश्री' नामबाट १९८५ सालमा सम्पादन गरी प्रकाशनमा ल्याउनु भएको छ ।[64]

माथि उल्लेखित विभिन्न ग्रन्थहरुका अतिरिक्त लीलावज्रको 'आर्यनामसंगीतिटीका' र इन्द्रभूतिको 'आर्यमञ्जुश्रीनामसंगीति वृत्ति' गरी दुईवटा ग्रन्थको नाम पनि साधनामालामा उल्लेख गरिएको पाइन्छ ।[65] अन्य

---

[60] पूर्वोक्त टिप्पणी नं. १४,
[61] पूर्वोक्त टिप्पणी नं. १,
[62] पूर्वोक्त टिप्पणी नं. १५, (I)
[63] पूर्वोक्त टिप्पणी नं. १६, पृ. २३२
[64] पूर्वोक्त टिप्पणी नं. १५, (II)
[65] पूर्वोक्त टिप्पणी नं. ५, पृ. ५६, ९८

विद्वानहरुमा प्रथम दलाई लामाका गुरु भदन्त श्रीज्ञानध्वजले पनि तिब्बती भाषामा नामसंगीतिको टिका लेखेको भेटिएको छ।[66]

नामसंगीतिका अनेकौं संस्करणहरु नेपालमा प्रकाशित भै सकेका छन् । श्रद्धालु भक्तजनहरुबाट नित्यपाठ गर्ने काममा सहयोग पुगोस् भन्ने हेतु विभिन्न पर्वहरुमा यस्ता नामसंगीति ग्रन्थ प्रकाशित हुने गर्छन् । तर यस्ता प्रकाशनहरुको लेखाजोखा गर्न सकिन्दैन ।

आर्यमञ्जुश्रीनामसंगीतिको प्रतीकको रुपमा आर्यमञ्जुश्रीलाई प्रशंसा गरी श्रद्धाभावले गुणानुस्मृतिका स्तोत्रहरु रचना भै रहेको पाईन्छ । कतिपय यस्ता स्तोत्रहरुमा रचनाकारहरुले आफ्नो नाम भने उल्लेख गरेका भेटिन्दैनन् । सम्भवतः ती रचनाकारहरुले आफ्नो प्रख्यापन भन्दा मञ्जुश्रीको गुणानुस्मृतिलाई नै बढी महत्व दिएको देखिन्छ । तर कुनै स्तोत्रहरुमा भने रचनाकारहरुका नाम उल्लेख भएको पाईन्छ । त्यस्ता रचनाकारहरुमा मञ्जुगर्भ, विश्वकर्मा, मञ्जुर्गत, प्रतापमल्ल आदि पर्छन् ।

आर्यमञ्जुश्रीको स्तोत्रको अतिरिक्त मञ्जुश्रीसंग सम्बन्धित अन्य ग्रन्थहरुको विवरण पं. हेमराज शाक्यको 'यशोधर महाविहार स्थित मञ्जुश्रीया छगू इतिहास' नामक पुस्तकमा समावेश गरिएको छ ।[67] उक्त विवरणमा अनुसार-मञ्जुवराख्य पद्धति, मञ्जुश्रीयाख्यवज्र भैरव योगतन्त्रम, मञ्जुश्रीकृयाविधि, मञ्जुश्रीकोषतन्त्र, मञ्जुश्रीपरिपृच्छासूत्र, मञ्जुश्रीबुद्धक्षैत्रव्यूह, मञ्जुश्रीमूलकल्प, मञ्जुश्रीमुखाख्यान, मञ्जुवज्रहस्तपूजा, मञ्जुश्रीपाराजिका, मञ्जुश्रीबुद्धक्षेत्र गुणव्यूहालंकारसूत्र, मञ्जुश्रीबुद्धपादुका, मञ्जुश्रीमूलतन्त्र, मञ्जुश्री विक्रिदितसूत्र, मञ्जुश्रीसाधनम, मञ्जुश्रीसाधन प्रतिमा लक्षणम् जस्ता मञ्जुश्रीका विविध ग्रन्थहरुका अतिरिक्त मञ्जुश्री सम्बन्धी चर्यागीत, भजन गीतहरु उल्लेख भएका छन् । यी विषयबस्तुहरु नेपालमण्डलको बौद्ध समाज बीच अति प्रशिद्ध छ ।

---

[66] हेमराज शाक्य (सं.), *आर्यनामसंगीति संक्षिप्त परिचय,* (ललितपुर), पृ. ५ ।
[67] हेमराज शाक्य, *यशोधर महाविहार स्थित मञ्जश्रीया छगू इतिहास,* (बुबाहा:, वि. सं. २०५०), पृ. ११, १२ ।

# अध्याय पाँच

## नामसंगीति ग्रन्थानुसार आर्यमञ्जुश्रीको रुप वर्णन

आर्यमञ्जुश्रीनामसंगीतिलाई लिएर रचना गरिएका टीका, महाटीका, उपटीका, पञ्जिका, वृत्ति, साधन, भाषा आदि ग्रन्थहरु र विभिन्न स्तुति गीतलाई आधार बनाई गुरुजनहरुको निर्देशानुसार आर्यमञ्जुश्रीनामसंगीति-वागीश्वर मञ्जुश्री विषयक लक्षण प्रमाण मिलाइ पुण्यसंचय गर्ने उद्धेश्यले श्रद्धालु भक्तजनहरुद्वारा रुपकायको रुपमा निर्माण गरिएका आर्यमञ्जुश्रीनामसंगीतिको विभिन्न प्रकारका मूर्तिहरु विहार तथा बौद्ध स्थलहरुमा विधिपूर्वक स्थापना गरिएका प्रशस्त भेटिन्छन् । विशेष गरी नेपालमण्डलका बौद्ध विहार, चोक, ननिमा मात्र होईन नेवा बौद्धहरुका घर घरमा समेत आर्यमञ्जुश्रीका मूर्तिहरु प्रतिस्थापित छन् । त्यस्तै आर्यमञ्जुश्रीको पौभाचित्र, भित्तेचित्र, गाताचित्रहरु पनि प्रशस्त भेटिन्छन् ।

आर्यमञ्जुश्रीको रुप ध्यान वर्णन (Iconography) सम्बन्धी अंग्रेजीमा लेखिएका दुईवटा पुस्तक अति प्रसिद्ध छन् ।[68] त्यस्तै नेपाल भाषामा लेखिएको हेमराज शाक्यको आर्यनामसंगीति नामक पुस्तकमा नेपाल उपत्यकामा स्थापना भईरहेका प्राचीन मञ्जुश्रीको रुपवर्णन गरिराखेको पाईन्छ ।[69] पुस्तकमा वर्णन गरिएका मञ्जुश्रीको रुपवर्णन यस प्रकारका छन् :-

१. वज्रपर्यङ्क मुद्रा अवस्थित एक हातमा खड्ग र अर्को हातमा पुस्तक धारण गरीरहेको श्रीस्वयम्भू मञ्जश्री पर्वत स्थित मञ्जुश्रीको एक मुख द्विभुज प्रस्तर मूर्ति ।
२. वज्रपर्यङ्क मुद्रामा अवस्थित दायाँ दुई हातले खड्ग, धनु र बायाँ हातले पुस्तक र वाण धारण गरिरहेको श्रीस्वयम्भू पर्वत स्थित चतुर्भुज मञ्जुश्रीको मूर्ति ।
३. एक मुख द्वादश भूजयुक्त श्री स्वयम्भू स्थित हारतीदेवीको पछाडि स्थापित अरपचन वागीश्वर मञ्जुश्री (नामसंगीति)को प्रस्तर मूर्ति ।

---

[68] I) Benoytosh Bhattacharya, *'Indian Buddhist Iconogrphy (Calcutta, 1958)*
II) Mane Therese de Mallman, *Etude Iconographique Sur Manjusri* (Paris: Ecole Francaise d' Extreme orient, 1964)

[69] पूर्वोक्त टिप्पणी नं. ६५, पृ. १४ ।

४. वज्रपर्यङ्कमुद्रामा अवस्थित श्रीस्वयम्भूबही विहारको त्रिमुख, षट्भुज युक्त मञ्जुश्रीको मूर्ति ।

५. वज्रपर्यङ्क मुद्रामा गरुडासनको श्रीस्वयम्भू शान्तिपुर संगै स्थापित मञ्जुश्रीको प्रस्तर मूर्ति ।

६. पादुका मण्डल युक्त परिवार सहितको श्रीस्वयम्भूस्थित अग्निपुरसंगै स्थापित मञ्जुश्रीको प्रस्तर मूर्ति ।

७. धर्मचक्र मूद्राको काष्ठमण्डप संगै स्थापना गरिएको एक मुख द्विभूज मञ्जुश्रीको प्रस्तर मूर्ति । मूर्ति पछाडि शिष्य धर्माकरको उभिरहेको मूर्ति ।

८. सत्वपर्यङ्क मुद्रामा अवस्थित दायाँको चारैहातमा एउटा एउटा खड्ग र बायाँको चारैहातमा एउटा एउटा पुस्तक समाई रहेको ललितपुरको महाबुद्ध मन्दिरको चतुर्मुख, अष्टभुज युक्त मञ्जुश्रीको प्रस्तर मूर्ति ।

९. अर्धवज्रपर्यङ्क मुद्रामा अवस्थित काँढमा खड्ग थम्याइरहेका ललितपुर स्थित महाबौद्ध मन्दिरको एक मुख द्विभुजधारी मञ्जुश्रीको प्रस्तर मूर्ति ॥

१०. धर्मचक्र मुद्रामा अवस्थित ललितपुर, जेष्ठवर्ण महाविहारको सन्मुख चतुर्व्यूह चैत्यमा राखिएको एक मुख द्विभुज युक्त मञ्जुश्रीको उभिरहेको प्रस्तरको मूर्ति ।

११. वज्रपर्यङ्क मुद्रामा अवस्थित श्रीस्वयम्भू मूर्ति संगहालय स्थित दायाँ-बायाँ गणेश महाकाल सहितको एक मुख चतुर्भुजयुक्त मञ्जुश्रीको प्रस्तर मूर्ति ।

१२. वरद मुद्रा गरी समपदस्थ आसनमा अवस्थित काठमाडौं लाजिम्पाटको मन्दिरको चिन्तामणि रत्नयुक्त मञ्जुश्रीको प्रस्तर मूर्ति ।

१३. ललितपुर, ओकुबहाल स्थित शक्ति सहित एक मुख अष्टभुजधारी सुखासनमा रहेको मञ्जुश्रीको प्रस्तर मूर्ति ।

१४. वरदा र मोक्षदादेवी सहित धर्मचक्र मुद्रा गरी सिंह आसनमा विराजित ललितपुर, क्वाबहाल स्थित स्वयम्भू चैत्यको मन्दिरमा स्थापित मञ्जुश्रीको धातुमूर्ति ।

१५. वज्रपर्यङ्क आसनमा अवस्थित द्विभुज-धर्मचक्र मुद्राधारी, ललितपुर, यशोधर महामविहार (बुबहाल) स्थिते शिखरकुट मन्दिरमा स्थापित मञ्जुश्रीको धातुको मूर्ति ।

माथि उल्लेखित प्रस्तर तथा धातुबाट निर्मित मञ्जुश्रीका मूर्तिहरु मूर्तिकलाका विशिष्ट नमुनाहरुका रुपमा लिन सकिन्छ । हुनत नेपालमण्डलका विभिन्न धार्मिक स्थलहरुमा स्थापना भईरहेका मञ्जुश्रीका अधिकांश प्रस्तरमूर्तिहरु मध्ये एक मुख, द्विभुज, एक मुख चतुर्भुज युक्त मञ्जुश्रीका मूर्तिहरु धेरै भेटिन्छन् । द्विभुज मञ्जुश्रीको दायाँ हातले खड्ग र बायाँ हातले पुस्तक धारण गरिएको हुन्छ भने चतुर्भुज मञ्जुश्रीको दायाँ दुई हातले खड्ग र धनु तथा बायाँको दुई हातले पुस्तक र वाण धारण गरी सिंह आसनमा रहेको हुन्छ । मञ्जुश्रीले धारण गरेका यी दुई प्रकारका आयुधको अर्थ विशुद्धि अनुसार खड्गले ग्राह्य ग्राहक छेदन गरी अग्राहको ज्ञान दिइरहेको हुन्छ अर्थात् खड्गमा रहेको दुवैतिरको धारले आफु र आ-नो भने अंहकार ललकारलाई काटि शून्यताको बोध गराउने उद्धेश्यले एउटा हातले खड्ग धारण गरेको तथा सो कुराको ज्ञान आर्जन हुने प्रज्ञापारमिता पुस्तक अर्को हातले आदरपूर्वक धारण गरेको संकेत गर्छ । त्यस्तै चतुर्भुजधारी मञ्जुश्रीको हकमा खड्ग पुस्तकको अतिरिक्त धनु र वाण धारणले अर्थविशुद्धिमा चित्त एकाग्र गरी पूर्णलक्ष्यमा पुग्ने संकेत गर्छ ।

मञ्जुश्रीका विविध मुद्राहरु मध्ये एक मुख द्वादशभुजधारी अरपचन वागीश्वर महामञ्जुश्री पनि एक हो । यो नामसंगीतिको नामले प्रशिद्ध छ । अद्वय परमार्थ नामसंगीतिमा वर्णन गरिए अनुसार नामसंगीतिलाई वैरोचन आदि पञ्चबुद्धको एकात्मकरुपको अर्थमा लिइएको छ । नामसंगीतिकै मायाजालाभिसंबोधिक्रम गाथा परिच्छेदमा पञ्चतथागतको एकात्मक रुप हुनु भएका महामञ्जुश्री समेत ६ जना मञ्जुश्रीको अलग अलग नाम उल्लेख गरिएको छ । यसरी नै पञ्चबुद्ध र महामञ्जुश्रीका कुलको बारेमा नामसंगीतिका षट्कुलावलोकन गाथामा चर्चा गरिएको छ । जस अनुसार वैरोचन, अक्षोभ्य, रत्नसंभव, अमिताभ, अमोघसिद्धि कमशः कुलत्रयकुल, लोकालोककुल, महोष्णीषकुल, लोकालोकोत्तरकुल, मन्त्रविद्याधरकुल र महामुद्रा अर्थात् बोधिचित्त वज्रकुलमा पर्छन् । वैरोचनादिको षट्कुललाई चिन्हको रुपमा क्रमशः चक्र, वज्र, रत्न, पद्म, विश्ववज्र र वज्रतीक्ष्णखड्ग लिइएको छ ।[70]

[70] पञ्चाकाराभिसम्बोधि, धी १७, (सं. एस. रिनपोछे तथा एस. एस. बहुलकर, के. उ. ति. शि. सं., वाराणसी, १९९४), पृ. २१ । यसरी नै नेपालको अन्य भागमा यत्रतत्र छरिएर रहेका मञ्जुश्रीका मूर्ति एवं चित्रहरुका बारेमा पनि अनुसन्धान गरी उनीहरुको रुप ध्यान वर्णन बारे (Iconography) अध्ययन हुनु आवश्यक देखिन्छ ।

नामसंगीतिको प्रतिमूर्ति अरपचन वागीश्वर महामञ्जुश्री एक मुख द्वादश भूजका हुनुहुन्छ । ती द्वादश भूजमा क्रमशः ध्यान मुद्रा, भूस्पर्श मुद्रा, वरद मुद्रा, अभय मुद्रा, उपदेश मुद्रा, खड्ग, पुस्तक तथा शर, धनु धारण मुद्रा र अध्येषणा मुद्रा पर्छन् । यहाँ ध्यान मुद्राले अमिताभ तथागतको प्रतिनिधित्व गरेको छ भने त्यहिं ध्यान मुद्राको हातमा अवस्थित पृथ्वीपात्ररुपी पिण्डपात्र स्पर्शगरी पृथ्वीस्पर्श अर्थात् भूस्पर्श मुद्राले अक्षोभ्य तथागतको रुप देखाएको छ । त्यस्तै सोहि पात्रमा रहेको वरदमुद्राले रत्नसम्भव तथागतको रुप प्रस्तुत गरेको छ भने ह्रदयस्थित दुई हातको अभय र उपदेश मुद्राले अमोघसिद्धि तथागत र वैरोचन तथागतको प्रतिनिधित्व गरिरहेको छ । यसरी नामसंगीतिको दायाँवायाँका चारहातले क्रमशः शर धनुष र खड्ग पुस्तक अंकित षड्कुल चिन्ह सहितको खट्वांग धारण गरिरहेको रुप स्वयं महामञ्जुश्रीको हो र शिरोपरीको दुईहात अध्येषणा-महामुद्रामा रहेको छ । जसको अर्थ बोधिचित्तलाई एकाग्र गरी आ-नो शिरोपरीमा राखी पूजा सत्कार गरिरहेको देखाउँछ ।[71]

माथि उल्लेखित नामससंगीति- अरपचन वागीश्वर महामञ्जुश्रीको ध्यानरुपको अतिरिक्त नामसंगीतिमा उल्लेख गरिएका मञ्जुश्रीको रुप वर्णन गर्ने क्रममा पं. दिव्यवज्र वज्राचार्यले 'अद्वय परमार्था नामसंगीति' पुस्तकमा विभिन्न आठ रुपको वर्णन गरिएको पाइन्छ ।[72] जस्तै :-

**१. श्रीआदिबुद्ध मञ्जुश्री**

पञ्चमुख अष्टभूजधारी श्रीआदिबुद्ध मञ्जुश्री वज्रपर्यङ्क मुद्रामा अवस्थित हुनुहुन्छ । वहाँले दायाँको चारैहातले चारवटा खड्ग र बायाँको चारैहातले चारवटा पुस्तक धारण गर्नुभएको छ । श्रीआदिबुद्ध मञ्जुश्री त्रिकालका बुद्धहरुको हृदयमा रहनु हुन्छ ।

**२. श्रीमञ्जुश्रीज्ञानसत्व**

वज्रपर्यङ्क मुद्रामा अवस्थित मञ्जुश्रीज्ञानसत्व षट्मुख, द्विभुजधारी हुनुहुन्छ । दुवै हातले प्रज्ञापारमिता पुस्तक युक्त कमलपुष्प धारण गर्नुभएको मञ्जुश्रीज्ञानसत्व महावैरोचनको ह्र्दयमा रहनु हुन्छ । नामसंगीतिमा वर्णित सम्पूर्ण आठसय नाम मन्त्र यी नै मञ्जुश्रीमा केन्द्रीत छ ।

---

[71] हेमराज शाक्य, स्वयम्भू महाचैत्य, काठमाडौं, (स्वयम्भू विकास मण्डल, ने. सं. ११९८), पृ.

[72] पूर्वोक्त टिप्पणी नं. ११, भूमिकाबाट ।

३. श्रीवज्रखड्गमञ्जुश्री

वज्रपर्यङ्क मुद्रामा अवस्थित एकमुख, द्विभुज/खड्ग र वज्रधारी श्रीवज्रखड्ग मञ्जुश्री अक्षोभ्य बुद्धको हृदयमा रहनुहुन्छ।

४. श्रीप्रज्ञाज्ञानमञ्जुश्री

वज्रपर्यङ्क मुद्रामा अवस्थित एकमुख, द्विभुज/खड्ग र चक्रधारी श्रीप्रज्ञाज्ञानमञ्जुश्री वैरोचन बुद्धको हृदयमा रहनुहुन्छ।

५. श्रीवागीश्वरमञ्जुश्री

वज्रपर्यङ्क मुद्रामा अवस्थित एकमुख, द्विभुज/खड्ग र रत्नधारी श्रीवागीश्वरमञ्जुश्री रत्नसम्भव बुद्धको हृदयमा रहनुहुन्छ ।

६. श्रीवज्रतीक्ष्णमञ्जुश्री

वज्रपर्यङ्क मुद्रामा अवस्थित, एकमुख, द्विभुज/खड्ग र पट्टधारी श्रीवज्रतिक्ष्णमञ्जुश्री अमिताभ बुद्धको हृदयमा रहनु हुन्छ।

७. श्रीज्ञानकायमञ्जुश्री

वज्रपर्यङ्क मुद्रामा अवस्थित एकमुख, द्विभुज/खड्ग र विश्ववज्रधारी श्रीज्ञानकायमञ्जुश्री अमोघसिद्धि बुद्धको हृदयमा रहनुहुन्छ।

८. श्रीअरपचनमञ्जुश्री

वज्रपर्यङ्क मुद्रामा अवस्थित, एकमुख, द्विभुज-खड्ग र पुस्तकधारी श्रीअरपचनमञ्जुश्री बोधिचित्तवज्रको हृदयमा रहनुहुन्छ।

माथि उल्लेखित मञ्जुश्रीका अतिरिक्त नामसंगीतिसंग सम्बन्धित वागीश्वर मञ्जुश्रीको साधना गर्ने क्रममा आउने विविध ध्यान रुपका मञ्जुश्रीहरुको वर्णन साधनामाला ग्रन्थमा भेटिन्छन्।[73]

---

[73] पूर्वोक्त टिप्पणी नं. ५, पृ. ९३ - १६९

## अध्याय छ

# आर्यमञ्जुश्रीनामसंगीति ग्रन्थ परिचयः

आर्यमञ्जुश्रीनामसंगीतिको मूलतन्त्र सोह्र हजार मायाजालमहायोगतन्त्रको समाधि जाल पटलबाट उद्धृत गरिएको हो । यसबारे नामसंगीतिको अन्तिम पुष्पिकामा 'आर्यमायाजाल षोदशसाहश्रिका तन्त्रातपति समाधिजाल पटलात् भनि उल्लेख गरिएको छ । आर्यमञ्जुश्रीनामसंगीति तन्त्रमा पद्यात्मक श्लोकहरु र अनुशंसाको (प्रसंशा) गद्यात्मक अंश सहित गरी जम्मा १४ परिवर्तमा विभाजन गरिएको छ । नामसंगीतिमा अध्येषणा गाथादेखि उपसंहार गाथासम्म गरी जम्मा १६७ श्लोकहरु छन् । ती १६७ श्लोक मध्ये पनि नामसंगीतिको मूल विषयवस्तु वज्रधातुमण्डलज्ञान गाथादेखि कृत्यानुष्ठानज्ञान गाथासम्मका ६ वटा परिच्छेद महत्वपूर्ण मानिन्छ जस्मा जम्मा १३० श्लोक पर्न आउँछ । यी १३० श्लोक भित्र ८१२ विभिन्न मन्त्राक्षर पदहरु उल्लेख भएका छन् ।[74] नामसंगीतिका विभाजित १४ परिच्छेदहरु यस प्रकारका छन् : -

१) अध्येषणा २) प्रतिवचन ३) षट्कुलावलोकन ४) मायाजालाभिसम्बोधि ५) धर्मधातुमण्डल ६) सुविशुद्ध धर्मधातुज्ञान ७) आदर्शज्ञान ८) प्रत्यवेक्षणा ज्ञान ९) समताज्ञान १०) कृत्यानुष्ठानज्ञान ११) पञ्चतथागत ज्ञान स्तुति १२) अनुशंसा १३) मन्त्रविन्यास १४) उपसंहार ।

नामसंगीति मूलतन्त्रको प्रांरम्भ अध्येषणा गाथादेखि शुरु हुन्छ । यस गाथामा गुह्याधिपति वज्रपाणिले भगवान् बुद्धलाई प्रमाण गरी कृताञ्जलि मुद्रामा भगवान्को सन्मुख मायाजाल महातन्त्र अन्तर्गत अभिसम्बोधि प्राप्त गर्न, अतित अनागत र प्रत्युत्पन्न बुद्धहरुद्वारा देशित गम्भिर, उदार र महान् अर्थ युक्त मन्त्रधर र महावज्रधरगणद्वारा धारित नामसंगीतिको उपदेश वज्रधर स्वयं तथा राग, द्वेष, मोहादि क्लेशले व्याकुल सत्वहरुको अनुत्तर फल प्राप्तिको लागि अध्येषणा गरेको बारे वर्णन गरिएको छ ।

[74] साधनामालामा संग्रहित धर्मधातु वागीश्वर साधनमा अष्टशतनामधेयं नामसंगीति अर्थात् ८०० नाम भएका नामसंगीति भनि उल्लेख गरिएको छ ।

वज्रधरको अध्येषणागाथा पश्चात मनुष्य मध्ये सर्वश्रेष्ठ भगवान् बुद्धले स्मित हास्य मुद्रामा सबैको हित सुखको लागि करुणा राखी मञ्जुश्रीज्ञानकाय नामसंगीतिको बारेमा देशना गर्नेछु, एकाग्र मनले सुन्नु भन्ने भगवान् बुद्धको प्रतिवचन गाथा देश्रो परिच्छेद अन्तर्गत समावेश गरिएको छ । त्यस्तै तेश्रो परिच्छेदमा पञ्चस्कन्धात्मक सत्वप्राणीहरुको कुलको बारेमा षट्कुलावलोकनको वर्णन गरिएको छ । यस षट्कुल अन्तरगत वैरोचनको कुलत्रयकुल, अक्षोभ्यको लोकालोककुल, रत्नसम्भवको महोष्णीषकुल, अमिताभको लोकालोकोत्तरकुल, अमोघसिद्धिको मन्त्रविद्याधरकुल र महामञ्जुश्रीको महामुद्रा बोधिचित्त वज्रकुलको अवलोकनको विषयमा वर्णन गरिएको छ ।

नामसंगीतिको चौथो परिच्छेदमा मायाजालाभिसम्बोधिको बारेमा वर्णन छ । यस गाथामा षट्चक्रमा अवस्थित मञ्जुश्री ज्ञानसत्व, वज्रखड्गमञ्जुश्री, वागीश्वरमहामञ्जुश्री, वज्रतीक्ष्णमञ्जुश्री, ज्ञानकाय मञ्जुश्री र अरपचनमञ्जुश्रीको नाम उल्लेख गरिएको छ ।

मायाजालाभिसम्बोधि गाथा पछि नामसंगीतिको मूल ६ वटा परिच्छेद आउँछन् । यसमा वज्रधातुमहामण्डल गाथा सहित पञ्चतथागत - वैरोचन, अक्षोभ्य, रत्नसम्भव, अमिताभ र अमोघसिद्धिका क्रमशः सुविशुद्धधर्मधातुज्ञान, आदर्शज्ञान, समताज्ञान, प्रत्यवेक्षणाज्ञान र कृत्यानुष्ठानज्ञानको वर्णन गरिएको छ । नामसंगीतिको मूल विषय यी ६ परिच्छेदमा समाहित छ । यस पछिको परिच्छेद पञ्चतथागत ज्ञानको स्तुति हो । यो परिच्छेद पछि अनुशंसा परिवर्त दिइएको छ । यस अनुशंसा परिवर्तमा नामसंगीतिको धारण, वाचन पूजन आदिद्वारा हुने पुण्य लाभ, हित सुख विषयक गद्यात्मक षट्चक्र उल्लेख गरिएको छ ।

नामसंगीतिको अर्को परिच्छेद मन्त्रविन्यासको परिच्छेद हो । अन्त्यमा उपसंहार गाथा सँगै नामसंगीति गाथा समाप्त हुन्छ ।

नामसंगीतिमा वर्णित पञ्चतथागतको पञ्चज्ञान कुनै न कुनै तथागतसंग सम्बन्धित छ । अर्थात् सुविशुद्धधर्मधातुज्ञान वैरोचनसंग सम्बन्धित छ भने आदर्शज्ञान अक्षोभ्य तथागतसंग सम्बन्धित छ । त्यस्तै समताज्ञान रत्नसम्भव तथागत, प्रत्यवेक्षणाज्ञान अमिताभ तथागत र कृत्यानुष्ठानज्ञान अमोघसिद्धि तथागतसंग सम्बन्धित छन् । नामसंगीतिमा

पञ्चज्ञान सम्बन्धी ११६ वटा श्लोकहरु रचना भएको पाईन्छ । ती श्लोकहरु पञ्चबुद्धात्मक ज्ञानकायमञ्जुश्रीलाई परिलक्षित गरी पञ्चज्ञानको स्वभाव तथा लक्षण वर्णन गर्ने गाथाको रुपमा रचना भएको छ ।

पञ्चज्ञानलाई मञ्जुश्रीको रुपमा प्रस्तुत गरिएको हुनाले नामसंगीतिलाई आर्यमञ्जुश्रीनामसंगीति नामाकरण गरेको हो भन्ने कुरा माथि चर्चा भइसकेको छ । नामसंगीतिमा भएका यावत ज्ञान बुद्धज्ञान अर्थात् बुद्धत्वका लागि कारक ज्ञान भएकोले सो ज्ञान आर्जन गर्ने हेतुले बौद्ध अनुयायीहरुले नामसंगीतिको नित्य पाठ तथा स्मरण गर्दै आएका हुन् । महायानी, वज्रयानी बौद्ध परम्परा भएका देशहरुमा यसको पूजा पाठ गर्ने चलन छ । नेपालको सन्दर्भमा यहाँका विहार एवं देवस्थलहरुमा स्थानीय बौद्धहरले नित्याचारको रुपमा नामसंगीति पाठ गर्ने क्रम अद्यापि चलाइ आएका छन् ।

## अध्याय सात

## आर्यमञ्जुश्रीनामसंगीति र नेवा:बौद्ध समाज

ज्योतिरुपश्रीस्वयम्भूधर्मधातु वागीश्वर उत्पत्ति भएको पवित्र भूमि नेपाल ककुच्छन्द, कनकमुनि र शाक्यमुनि बुद्धहरुको जन्म लिएको बुद्धभूमिको रुपमा चिनिन्छ । यहाँ प्राचीन कालदेखि बुद्धधर्मको व्यापक रुपमा प्रचार भई सोही धर्म अनुरुपको संस्कृति-बौद्ध संस्कृतिको विकास भई आएको छ । अत: बुद्धधर्म र बौद्ध संस्कृतिले यहाँको जनजीवनलाई प्रभावित भईरहनु आश्चर्यको कुरो होईन् । यहाँका बौद्ध अनुयायीहरुले बुद्ध बोधिसत्वादि प्रति अगाढ श्रद्धा राखी बुद्ध धर्म र संघ प्रति समर्पित भई बोधिज्ञान आर्जन गर्ने हेतु चित्त एकाग्र गरी ध्यान भावनामा लाग्ने दैनिक चर्याको अनुसरण गरिआईरहेको पाईन्छ । यसको साथै बुद्ध बोधिसत्वादिहरुको विधिपूर्वक पूजा तथा धारणी गाथा तथा स्तोत्रादि पाठ गरी सद्धर्म चर्या अभ्यास गर्ने परम्परालाई पनि उनीहरुले निरन्तरता दिंदै आइरहेका छन् ।

नेपालमण्डलमा विषेशगरी नेवा: बौद्ध समाजमा दैनिक चर्या अन्तर्गत सद्धर्मपाठ गर्ने परम्परा निकै पुरानो हो । सद्धर्मपाठ गर्ने क्रममा काय वाक् चित्त शुद्ध गरी सप्तविधानोत्तर पूजा सामाग्री सहित धुप दीप बाली बुद्ध बोधिसत्वादिको सन्मुख ध्यान ज्ञान चिन्तन गरी एकाग्रचित्तले शान्तपूर्वक बसी श्रद्धालुपूर्वक नमो रत्नत्रयाय' वाक्य उच्चारण गरी बुद्ध, धर्म, संघ-त्रिरत्नलाई वन्दना गरी उनीहरु सद्धर्मपाठ चर्या सुभारम्भ गर्छन् । त्यसपछि बोधिज्ञान आर्जन गर्ने हेतु त्रिबोधिचित्त- बोधिप्रणिधिचित्त, बोधि प्रस्थानचित्त र बोधिपरिणामना चित्त उत्पन्न गरी आकाशधातु पर्यन्तका प्राणीहरु सबैले बुद्धत्व प्राप्त गर्न सकुन् भन्ने चिन्तन सहित 'आकाश धातु पर्यन्तेष' गाथा वाचन गर्छन् । त्यसपछि त्रिरत्न सहित गुरु वज्रधरलाई वन्दना गरी त्रिरत्नको ध्यान गर्ने, त्रिशरण जाने, पञ्चशील वा अष्टशीलादि ग्रहण गरी आत्माभाव समर्पण गर्न गाथा पढ्न् थाल्छन् । तत्पश्चात उनीहरु चित्तले ध्यान गरी वाक्‌ले धारणी पाठ र कायले बुद्ध बोधिसत्वादिहरुलाई विन्ति गरी पञ्च प्रणाम दण्डवत् गरिरहेका हुन्छन् ।

पञ्चप्रणामपछि सद्धर्मचर्या अन्तरगत आर्यमञ्जुश्रीनामसंगीति गाथा पाठ गरिन्छ । नामसंगीति पाठ सकिएपछि 'आर्यभद्रचरी गाथा' वाचन गरी मानसिक पूजा सहित बुद्ध बोधिसत्वादिहरुलाई रत्नमण्डल चढाउने,

पापदेशना गर्ने, धारणी स्तोत्रादि पाठ गर्ने गरिन्छ । पछि पुण्य परिणामना र क्षमायाचना सहित सद्धर्म पाठ कार्य सम्पन्न हुन्छ ।[75]

### ७.१. आर्यनामसंगीति वाचन पूर्वका नियमहरु

कुनै पनि कार्य, चाहे त्यो जुनसुकै क्षेत्रमा किन नहोस्, व्यवस्थित ढंगबाट सम्पन्न गर्नका लागि आवश्यकता अनुरुप विभिन्न नियम उपनियमहरु तर्जुमा भएका हुन्छन् । यस्ता निर्धारित गरिएका नियमहरुको परिधि भित्र रही आ-आफ्नो दायित्व पालन गर्नु सम्वन्धित सबैको कर्तव्य हुन्छ ।

शीलयुक्त बौद्धसमाजको सृजना गर्ने हेतु- बुद्धधर्मको क्षेत्रमा पनि बुद्ध धर्म संघ अथवा त्रिरत्न गमन सहित पञ्चशील, अष्टशीलादि विनयपूर्वक पालन गर्नु पर्ने अनेक नियमहरु छन् । शीलरुपी यस्ता नियमहरु मध्येमा पनि सद्धर्मपाठ गर्नु अघि पालना गर्नुपर्ने नियमहरु निर्धारित छन् । सद्धर्म पाठ गर्दा नेपालमण्डलका नेवाः बौद्ध समाजले पालन गर्नुपर्ने दश नियमहरु निम्नानुसारका छन् ।[76]

१. पाठगर्ने स्थान भूमिचर्याशील अनुसार सफा सुग्घर हुनुपर्छ । आसनहरुको व्यवस्था उचित रुपमा राख्नु पर्छ ।
२. नामसंगीति वाचन हुने धर्मस्थलमा नामसंगीति वा त्रिरत्नको प्रतिमा हुनुपर्दछ । साथै वितान, छत्र, ध्वज, पताकादि, अष्टमंगल, किकिनीजाल, सुगन्धित फूल, फुलमाला आदिले धर्मस्थललाई सजाइ बौद्ध वातावरण श्रृजना गर्न सक्नु पर्छ ।
३. बुद्ध बोधिसत्वादिका अगाडि सप्त विधानोत्तर पूजोपचार सहित सुगन्धित धूप दीप आदि पूजा सामाग्री हुनपर्छ ।
४. धर्मस्थलमा अखाद्य अपवित्र वस्तु-धुम्रपान, मद्यपान आदि जस्ता दुर्गन्धित वस्तु सेवन गर्नु, गराउनु निषेध गरीएको हुनुपर्छ ।
५. धर्मस्थलमा शस्त्र अस्त्र आदि हतियार ल्याउने, राख्ने निषेध भएको हुनुपर्छ ।
६. धर्मस्थलमा अमर्यादित वस्त्र तथा टोपी लगाइ पाठ गर्ने, श्रवण गर्ने निषेध गरीएको हुनुपर्छ ।

---

[75] हेराकाजी वज्राचार्य (सं.), *सद्धर्मपाठ संग्रह : भूमिकाबाट,* ललितपुर २०५८), पृ. १४ ।

[76] भिक्षु मञ्जुशासन, *महायान सूत्र धारणी पाठ विधि क्रम,* (ललितपुर, २०४७), पृ. घ - च

७. त्यस्तै सद्धर्म पाठ गर्ने ठाउँमा गुरुजन, मान्यवरहरुको सत्ता आफु उच्चासनमा बस्ने, अमर्यादित ढंगले- हात बाँधि खुट्टा तन्काई वस्ने, तथा, महिलाहरुको हकमा घुम्टो ओढि वा केश फिजाइ बस्नु हुन्दैन् ।

८. परस्परमा असम्बन्धित, नचाहिंदो विषयमा कुराकानी गर्ने, उच्च शब्दमा बोल्ने, हास्ने, ख्याल ठट्टागर्ने, हलचल गर्ने वपन अन्य खराब आचरणलाई त्यागी होशपूर्वक स्मृति राखी यथा स्थानमा बसी पाठ गर्नु पर्छ ।

९. सद्धर्म पाठ गर्नु अघि आदरपूर्वक त्रिरत्नादिमा त्रिवन्दना गरी आदरणिय गुरुजन आदिलाई सम्मानगरी मर्यादापूर्वक पाठगर्ने वा श्रवण गर्ने गर्नु पर्दछ ।

१०. आसन ग्रहणको क्रममा पुरुष र स्त्री अलग्ग अलग्ग बस्नुको साथै पुरुषले वज्रासन र स्त्रीले दुवै धुंडा भुंइमा टेकी बस्नु पर्छ ।

### ७.२. आर्यनमसंगीति वाचन विधि

नेपालमण्डलमा नेवाःबौद्ध समाजमा विशेष गरी महायानी बौद्ध समाजमा बुद्ध बोधिसत्वादीको शरण सहित नित्य धारणी, सूत्र स्तोत्रादि पाठ गर्ने चलन प्राचीन कालदेखिको हो । बुद्धधर्म र संघमा समर्पित भइ बोधिज्ञान आर्जन गर्ने हेतुचित्त एकाग्र गरी पूजा भावना गर्ने, विधिपूर्वक धारणी, गाथा, सूत्र, स्तोत्रादि पाठ गर्ने परम्परा छ । यसै सन्दर्भमा आर्यमञ्जुश्रीनामसंगीति वाचनको पनि आफ्नै विधिहरु छन् । ती विधिहरु अपनाइ नित्याचारको रुपमा यहाँका बौद्धहरुले नामसंगीति पाठ गर्दै आइरहेका छन् ।[77]

आर्यनामसंगीति वाचन गर्ने क्रममा यहाँका विहार तथा चैत्यादिमा प्रातः कालमा नै नामसंगीति वाचकहरु सम्मिलित हुन पुग्दछन् र मर्यादापूर्वक नामसंगीतिको मूर्ति वा चैत्य वा क्वाच्पाल देवताको सन्मूख बस्ने गर्दछन् । त्यसपछि नामसंगीति ग्रन्थलाई अगादि राख्दछन् । धूप दीप बालि सबैले अक्षता लिइ नमस्कार गरी श्री आर्यमञ्जुश्रीनामसंगीतिलाई स्मरण गरिन्छ । वाचकहरु मध्ये थकालि वा गुरुबाट वाचन कार्यको शुभारम्भ गर्दछ र पछि सम्मिलित सबैले एकै स्वरमा मिलाइ वाचन गर्दछन् ।

[77] हेराकाजी वज्राचार्य, *यशोधर महाविहार संघ, बुबहाल,* (ललितपुर, २०५०), पृ. ५१, ५२

आर्यनामसंगीति वाचनको शुभारम्भ बोधिचितोत्पाद गर्नेबाट हुन्छ। आकाशधातु पर्यन्तका सबै प्राणीहरुको बुद्धपद प्राप्तिको लागि चिन्तन गरी शुद्ध चर्या गर्ने प्रणिधान गरी 'आकाश धातु पयन्ते स्थिताय सर्वप्राणीनां ...' पाठको वाचन हुन्छ। त्यसपछि देव, मनुष्य, गरुड, यक्ष, गन्धर्व, किन्नर, नाग, असूर आदि सबैलाई मोक्षको द्वाररुपी शाक्यमुनिको वचन श्रवण गर्नका लागि आह्वान सहितको- 'ये देवा सन्तिमेरौ वरकनकमये मण्डले ये च यक्षाः ...' महायान सूत्रको पाठ गरिन्छ। सो पाठ पछि श्रीनामसंगीति रुपी महामञ्जुश्रीलाई स्मरण गरी- 'नमः श्री महामञ्जुनाथाय उच्चारण सहित महामञ्जुश्रीलाई अक्षता चढाउँछन् र सबैले मधुर आवाज निकालि एकै स्वरमा लयवद्ध गरी- 'अथवज्रधर श्रीमान् ...' गाथादेखि नामसंगीतिको प्रारम्भिक अध्येषणा गाथा वाचन गर्दछन्। नामसंगीतिको वाचन गर्ने क्रममा प्रत्येक गाथाको समाप्तिमा लय्माथि नियन्त्रण गरी लय्लाई माधुर्यता थप्दै वाचन गर्दछन्। नामसंगीति वाचन विधि अनुसार - मायाजालाभिसंबोधिक्रम गाथाको षण्मन्त्रराज- अ आ आदिको वाचन विना स्वर निकाली मन्त्र वाचन गर्ने जस्तै वाचन गर्दछन्।

नामसंगीति पाठ वाचन गर्न करिव एक देखि देढ घण्टासम्मको समय लाग्छ। पाठको समाप्ति पछि त्रिशरण सहित नामसंगीति पाठ गर्ने क्रममा कहिं कतै त्रुति आदि भएमा क्षमा याचना स्तुति गर्छन्। त्यसपछि शताक्षर धारणी, अपरिमित धारणी, स्तोत्रादि पाठ गरी सद्धर्म पाठ कार्य सम्पन्न गरिन्छ। पाठ कार्य सम्पन्न भएपछि देवदेवीको स्नान, पूजा आदि कार्य शुरु गरिन्छ। तत्पश्चात नामसंगीति वाचकहरु फुल, जल, टीका आदि ग्रहण गरी आरती लिई आ-आफ्ना घर फर्कन्छन्।[78]

आर्यनामसंगीति गाथाको पाठ मूलविहार बहीविहार लगायत अन्य शाखा विहारहरुमा प्रातः कालमा गरिन्छ। सद्धर्म पाठ संगै यहाँ नवग्रन्थको पाठ पूजा गर्ने चलन पनि छ। नवग्रन्थ मध्ये पनि शून्यता दर्शनज्ञानको ग्रन्थ प्रज्ञापारमिता ग्रन्थलाई यहाँ बढीं महत्व दिई आएको पाईन्छ। नामसंगीतिको विषय पनि शून्यता र करुणा भएको हुनाले श्री स्वयम्भूको प्रतिनिधित्वको रुपमा नेपालमण्डलका नेवाः बौद्धहरुले नामसंगीति पाठ गर्ने कार्यलाई अधिकतम महत्वका साथ निरन्तरता दिई आइरहेको देखिन्छ। प्रज्ञापारमितामा सवालाख श्लोक भएकै कारणले होला सवालाख पटक

---

[78] पूर्वोक्त टिप्पणी नं. ७५

नामसंगीति गाथा वाचन गर्ने नेवा: बौद्धहरुको परम्परा रह्यो । यसरी नै सवालाख पटक नामसंगीति पाठ गर्ने परम्परा तिब्बती बौद्धहरुमा पनि यथावत छ ।

नेवा: बौद्धहरुले सद्धर्मपाठका क्रममा नामसंगीति पाठ गर्ने कार्यलाई बढी महत्व दिएको पाईन्छ । हुनत नामसंगीतिका विभिन्न परिच्छेद भित्र समावेश भएका विषयवस्तु बुझ्नु त्यति सजिलो छैन । यो अत्यन्त गम्भिर एवं अर्थ युक्त छ । नामसंगीतिको ज्ञान विना वज्रयान दर्शनलाई राम्ररी बुझ्न नसकिने भएको हुनाले नामसंगीतिमा समाहित विविध विषयलाई लिएर यहाँ समय समयमा धर्मदेशना एवं छलफल भई रहन्छ ।

नेपालमण्डलका विहारको क्वाचपाल देवता वा चैत्यादिको सन्मुख बौद्ध अनुयायीहरु सामुहिक रुपमा भेला भई नामसंगीति वाचन गरिरहेका हुन्छन् । आर्यावलोकितेश्वरको रथयात्राका समयताका नामसंगीतिको पाठ भईरहन्छ । गुंलाधर्मको बेला अर्थात श्रावण भाद्र महिनामा घर घरमा समेत नामसंगीति पाठ गर्ने चलन छ भने कार्तिक महीना भरी श्रीस्वयम्भू महाचैत्य वा अन्य चैत्यादिको सन्मुख नामसंगीति पाठ गर्ने चलन छ ।

### ७.३. बौद्ध विहारमा नामसंगीतिको वाचन

नेपालमण्डलमा सद्धर्मपाठ गर्ने क्रममा नामसंगीति गाथा वाचनलाई प्रमुख स्थान दिइएको छ । यहाँको परम्परा अनुसार बौद्ध विहारमा गर्नुपर्ने नित्यकर्महरु नामसंगीति गाथा वाचनबाट शुरु हुन्छ । प्रात:कालमा यहाँका विहारहरुमा विराजित क्वाचपाल देवता, गन्धुरी देवताहरु सन्मुख सामुहिक रुपमा सम्मिलित भई धूप दीप बालि एकाग्र चित्तले लयवद्ध एकै स्वरमा नामसंगीति गाथा वाचन गरिन्छ । नामसंगीति वाचनको समाप्ति पछि मूलदेवता क्वाचपाल अथवा गन्धुरी देवता तथा अन्य देवीदेवताहरुलाई स्नान गराउने पञ्चोपचार पूजा गर्ने, धारणी स्तोत्रादि पाठ गर्ने र अन्य धार्मिक कार्यहरु क्रमश: शुरु गरिन्छ ।

### ७.४. चैत्यादिमा नामसंगीति पाठ

नामसंगीतिको प्रतीक स्वरुप श्रीस्वयम्भू महाचैत्यलाई यहाँका बौद्ध अनुयायीहरुले मूलज्ञानको रुपमा लिई अगाढ श्रद्धा राख्दै आइरहेका छन् । श्री स्वयम्भूँ चैत्यको प्रतीक स्वरुप यहाँका विभिन्न स्थानहरुमा चैत्य, धर्मधातुमण्डल आदि स्थापना हुन थाले । श्रीस्वयम्भू महाचैत्य अगाडि बसि

नामसंगीति पाठ गर्नु यहाँको परम्परा हो । त्यस्ता स्थापना गरीएका चैत्यहरुमा पञ्चबुद्ध र ती पञ्चबुद्धका कुलबाट उत्पन्न विभिन्न बोधिसत्व एवं देवी देवताहरुका मूर्तिहरु बनाई प्रतिस्थापित गर्ने कार्यहरु मात्र होईन पञ्चबुद्धको एकात्मक स्वरुप आर्यमञ्जुश्रीनामसंगीतिको मूर्तिहरु समेत विहारहरुमा स्थापना भए । यसरी स्थापना गरिएका विभिन्न चैत्यादिको सन्मुख बसेर नामसंगीति पाठ गरिन्छ । श्रीस्वयम्भूमा नामसंगीति पाठ गर्ने कार्यलाई निरन्तरता दिन यहाँका बौद्धहरुले नामसंगीति गुठीको पनि व्यवस्था गरेका छन् । नामसंगीतिसंग सम्बन्धित बुद्ध बोधिसत्व स्थापना गरेको स्थान, विहारको आसपास, देवस्थान, पाटी, सतल, धर्मशाला तथा टोल टोल, घर घरमा समेत नित्य नामसंगीति पाठ गर्ने चलन अद्यापि छ ।

### ७.५. गुंलाधर्ममा नामसंगीति पाठ

नेपालमा बौद्ध परम्परा अनुसार श्रावणकृष्ण प्रतिपदादेखि भाद्रकृष्ण प्रतिपदासम्मको एक महिना नेवाः बौद्धसमाज बीच गुंला धर्मको नामले प्रसिद्ध छ । नेवाः बौद्धहरुले यो महिनालाइ धर्मकर्म गर्ने महिनाको रुपमा लिन्छन् । बौद्धहरु यो महिना भरी प्रातःकालमा नामसंगीति गाथा पढ्ने, श्रीस्वयम्भू महाचैत्य सहित बौद्ध विहार चैत्यादिको परिक्रमा गर्ने, पूजा गर्ने, धर्म श्रवण गरी दान प्रदान गर्ने काममा संलग्न भईरहेका हुन्छन् ।

बौद्ध शास्त्रोक्त अनुसार गुंला महिना वर्षात ऋतुमा पर्ने भएकोले देशोपद्रव, अशान्ति, दुर्भिक्ष तथा संक्रामक रोगव्याधि आदि फैलदै जाने बढी सम्भाबना हुन्छ । ती सम्भाव्य भय उपद्रवादि निवारण भई प्राणीमात्रको कल्याण तथा उद्धार कामनार्थ बुद्ध बोधिसत्वादिको संस्मरण गरी वाद्यवादन सहित पूजा, गाथा, धारणी, स्तोत्रादि पाठ गर्ने चलन छ । यसैक्रममा गुँला अबधिभर महिनामा दिनको ३ पल्ट नामसंगीति पाठ गर्ने परम्परा समेत रहेको पाईन्छ ।

नेवाः बौद्ध समाजमा गुंलाधर्मको अबसर पारी अखण्ड रुपमा अहोरात्र नामसंगीति गाथा पाठ गर्ने चलन छ । अहोरात्र नामसंगीति पाठ विशेष गरी एक सातासम्म गरिन्छ । विभिन्न विहार, टोल एवं गाँउका सबै नामसंगीति खलकहरुलाई निमन्त्रणा गरी अहोरात्र नामसंगीति गाथा पाठ गर्न लगाईन्छ । एक पछि अर्को खलकले नामसंगीति गाथा पाठ गरिरहेका हुन्छन् । यसरी रात दिन एक पल एक क्षण पनि नरोकी अखण्ड रुपमा एक सातासम्म नामसंगीति वाचन गर्ने यहाँको चलन पुरानो हो । अहोरात्र नामसंगीतिगाथा विश्वशान्ति कामनार्थ पाठ गराईन्छ । नामसंगीतिको सप्ताहव्यापि अखण्ड पाठको आयोजना ललितपुरमा २०१६, २०१८, २०४४ र २०६४ सालमा भै

सकोको कुरा बुढापाकाहरु बताउन्छन् । पछिल्लो पटक पदमावती महाविहारमा २०६४ भाद्र २१ गते देखि आयोजना गरेको नामसंगीतिको सप्ताहव्यापि अखण्ड पाठको सम्झना अहिले सम्म पनि सबैलाई ताजा छ ।

### ७.६. करुणामय रथयात्रामा नामसंगीति पाठ

नेपालमण्डलमा हुने विभिन्न जात्रा मध्ये ललितपुर नगरमा वर्षेनी चलि आईरहेको आर्यावलोकितेश्वर- करुणामयको रथयात्रा पुरानो हो । रथयात्रा अवधिभर करुणामय सन्मुख भेलाभई श्रद्धालु भक्तजनहरु नामसंगीतिको पाठ गरिरहेका हुन्छन् । नामसंगीति वाचन पछि करुणामयको स्नान गर्ने, पूजा गर्ने तथा अन्य धार्मिक कार्यहरु सम्पन्न गरिन्छ ।

रथयात्राका क्रममा नामसंगीतिको प्रसादका रुपमा भोजन ग्रहण गर्ने परम्परा छ । करुणामयको रथलाई जावलाखेल तान्ने दिनमा श्री करुणामय, आर्य नामसंगीतिको पूजा गरी प्रसादको रुपमा भोजन गर्ने गराउने व्यवस्था भई आएको छ । प्रसाद ग्रहण गर्न हजारौं भक्तजनहरु उपस्थित भईरहेका देखिन्थे । नामसंगीतिको प्रसाद ग्रहण गर्नाले पुण्यफल प्राप्त हुने जनविश्वास छ । भनिन्छ, भोजन पछि मिल्काइएको पात खाने साँढेले समेत राम्रो फल प्राप्त गरेका थिए ।

### ७.७. नामसंगीतिको रिति-थिति एवं गुठी

नेवाः बौद्ध समाजमा नामसंगीतिको नाममा विभिन्न रिति-स्थिति एवं गुठीको व्यवस्था भै रहेको पाइन्छ । श्रद्धालु दानपतिबाट चैत्य तथा धर्मधातुमण्डलादि निर्माण गर्ने बेलामा चैत्यादि सन्मुख, नामसंगीति पाठ गर्नु पर्ने चलन छ । त्यस्तै चैत्याकारमा मन्दिर बनाई त्यसको गर्भगृहमा नामसंगीतिको रुपकाय स्वरुप मूर्ति स्थापना गरी चैत्य अगाडि दिनुहुँ नामसंगीति पाठ गरी साथै नित्य पूजा वर्षवन्धन गर्ने कार्य पनि गरिन्छ ।

नामसंगीति पाठको फल मिठो हुन्छ भन्ने जन विश्वास छ । यसैले कोही आफ्नो जन्मदिनका अवसरमा नामसंगीति वाचन खलकलाई घरमा आमन्त्रण गरी पाठ गराउन्छन् । नामसंगीतिको प्रतिमूर्ति सहित बुद्धबोधिसत्वादिको मूर्ति तथा पौभा चित्रहरु सजाई त्यसमा पूजा गरी दानपतिको सप्तवृद्धिको कामना गरी नामसंगीति पाठ गर्छन् । उक्त दिन वाचकहरुलाई अन्नादि सहित भोजन दान गर्ने चलन छ । दान गर्दा दान गाथा पढ्ने परम्परा छ ।

नामसंगीतिप्रति नेवाः बौद्धहरुको अगाढ विश्वास छ । नामसंगीतिको नामोच्चारण मात्रले पनि विभिन्न रोगादि निको हुने विश्वास भएकाले

परिवार कोहि विरामी भएको बेलामा वा मरणाशन्न अवस्थामा पुगेको बेलामा नामसंगीति गाथा सुनाई दिने चलन छ । त्यसै गरी आफ्ना पूर्वजहरुको सम्भनामा दिवंगत भएको तिथिपारी नामसंगीति वाचकरुलाई निमन्त्रणा गरी पाठ गराउने, दान प्रदान गर्ने चलन छ ।

नामसंगीति वाचकहरुले स्थानिय व्यक्तिहरु मिलि नामसंगीति गुठिको व्यवस्था गरी वर्षेनी प्रसाद ग्रहण गर्ने परम्परा बसालेका भेटिन्छन् । यिनीहरु नामसंगीति गुठि, स्तोत्र गुठि आदि नामबाट चिनिन्छन् । तर श्रीस्वयम्भू महाचैत्यको सन्मुख प्रतिवर्ष नेवाः तिथि (Lunar Calender) अनुसार आश्विन महीना भरी प्रातः कालमा नामसंगीति एवं अन्य स्तोत्रादि वाचा गर्ने परम्परा छ । श्रीज्योतिरुपस्वयम्भू उत्पत्ति भएको संस्मरणमा आश्विन पूर्णिमाको दिन साङ्गेगरी श्रीस्वयम्भू श्रीमञ्जुश्रीको पूजा गरी प्रसाद लिने परम्परा अद्यापि कायम छ ।

### ७.८. नेवाः बौद्ध जनजीवनमा नामसंगीति

नेपालमण्डलका नेवाः बौद्धहरुको नामसंगीति प्रति अगाढ श्रद्धा छ भन्ने कुरा माथि चर्चा भईसकेको छ । यसको प्रभाव उपत्यका बाहिर पनि फैलिएको छ । विभिन्न व्यबसायका कारण विभिन्न जिल्लामा बसाई सराई गएका नेवाः बौद्धहरुले आफ्ना परम्परागत संस्कृति अनुरुप धार्मिक, सामाजिक कार्यहरुलाई जीवन्तता दिने क्रममा नामसंगीति वाचनलाई पनि निरन्तरता दिई आइरहेको पाईन्छ ।

नामसंगीतिको धार्मिक र दार्शनिक ज्ञान बारे धेरैले जानुन् बुझुन् भन्ने उद्देश्यले आर्यमञ्जुश्री नामसंगीतिको प्रतिमूर्ति बनाई स्थापना गर्ने, पौभा चित्र, ग्रन्थचित्र तथा भित्ते चित्रहरु लेख्ने कार्यहरु पनि भैरहेको पाईन्छ । श्रद्धालुजन संस्कृत भाषामा लेखिएका नामसंगीतिगाथाको स्थानीय भाषा नेपालभाषामा अनुवाद गराई पुस्तकहरु प्रकाशन गरी निशुल्क बाँडने गर्छन् । बौद्धसूत्र ग्रन्थादिमा उल्लेख भए अनुसार धर्मानुयायीहरुले सद्धर्म ग्रन्थ सार्ने, देशना गर्ने आदि कार्यहरु निरन्तर भई आईरहेको देखिन्छ । नामसंगीति ग्रन्थ धेरै संख्यामा उपलब्ध हुनुबाट यो कुरा स्वत स्पष्ट हुन्छ । ग्रन्थ मुद्रण गरी प्रकाशन गर्ने चलन आएपछि त नामसंगीतिको पुस्तकहरु अझ धेरै संख्यामा प्राप्त हुन थाले । नामसंगीतिको प्रभावले नाना भय अन्तराय, रोग व्याधिको अन्त्य हुने जनविश्वासले गर्दा कोही कोहीले त नामसंगीतिगाथाको मूल संस्कृत श्लोकहरु लेखी त्यसलाई यन्त्रको रुपमा प्रयोग गर्ने तथा नराम्रा सपनाबाट छुटकारा पाउन वा डर भयबाट मुक्तहुन ग्रन्थलाई तकियामुनि राखी सुत्ने गरेको पनि पाईन्छ ।

### ७.९. नामसंगीतिको षट्चक्र अनुशंसाको प्रभाव

नामसंगीतिमा उल्लेखित षट्चक्र अनुशंसाले नेवा: बौद्ध समाजमा गहिरो प्रभाव पारेको छ । षट्चक्र अनुशंसा गद्यात्मक रुपमा लेखिएको छ । यसमा भगवान् बुद्धले सकल तथागतहरुको ज्ञानकाय मञ्जुश्री ज्ञानसत्वको नामसंगीतिद्वारा काय वाक् चित्त परिशुद्ध भई पुण्य संभार र ज्ञान संभार परिपूर्ण हुने अनुत्तर ज्ञानको अर्थ विशेष रुपले अवबोध हुने कुरा वज्रपाणिलाई आज्ञा भएको वर्णन छ । यस्तै नामसंगीति भनेको सकल तथागतको धर्मधातु भएको सर्वज्ञ भएको सवै धर्मको आगम व्याकरण तथा बुद्ध जननी, बोधिसत्व चर्याका श्रोत, चित्त एकाग्रहरुको लागि ध्यान, सबैको शान्ति, दुर्गतिको द्वार वन्द हुने, विभुक्ति मार्ग तिर लाने परिशुद्ध भूमि एवं पारमिता गुण धर्मको परिपूर्णता हो भनि बुद्धले आज्ञा गर्नुभएको छ । फेरी नामसंगीतिको प्रभावले अष्ट भयादि नाश हुने, दु:ख, विघ्न वाधा, अशान्ति एवं सबै अक्षण नाश हुनेछ भनी अनुशंसामा उल्लेख गरिएको छ । त्यस्तै नामसंगीतिको अनुशंसामा चूडामणि समानको नामसंगीति प्रतिदिन त्रिकाल धारण वाचन गर्नेहरु, अवबोध गर्नेहरु, प्रकाश गर्नेहरुको सर्वधर्म प्रत्यवेक्षण हुनेछन् तथा महाप्रत्यंगीरा लगायत अष्टलोकपाल दिक्पाल तथा नाग यक्षादिहरु सबैले रक्षा गर्ने हुन्छ ।[79]

त्यस्तै अखण्ड रुपमा प्रतिदिन तीनपल्ट शुद्ध रुपले पाठ गरी आफ्नो ध्यानद्वारा मञ्जुश्री ज्ञानसंभवको रुपकाय चित्तले आलम्वन गर्न सकेमा उसलाई कुनै प्रकारको भय सन्त्रास नहुने, सवै विद्याले पारंगत भई सवै शास्त्रको ज्ञान निर्धक्कपूर्वक धारा प्रबाह व्याख्यान गर्न सक्ने, सर्वसत्वका लागि बोधिचित्तमा अभ्यासरत हुन सक्ने भई सबैको प्रिय हुनेछ । भगवान बुद्धबाट नामसंगीतिको अनुशंसामा प्रकाश गर्नुभएको षट्चक्र अनुशंसाको कारण यहाँका बौद्धहरुले पनि नामसंगीति प्रति अगाढ श्रद्धा राखी यसलाई धारण तथा पालन गर्दै आइरहेका छन् ।

[79] पूर्वोक्त टिप्पणी नं. ११, पृ. ३६ - ५०

# आर्यमञ्जुश्रीनामसंगीतिमा समाहित पञ्चज्ञान

## परिचय

आर्यमञ्जुश्रीनामसंगीति गाथामा मूलरुपमा पञ्चज्ञानलाई यथार्थ रुपमा अवबोध गरी सोहि अनुरुप अभ्यास गर्दै अन्त्यमा बुद्धत्व प्राप्त गर्ने विषयवस्तुहरु समावेश गरिएको छ । नामसंगीति गाथामा वर्णन परेको पञ्चज्ञान भनेको पञ्चतथागतको ज्ञान हो । पञ्चज्ञानको अवधारणा कहिलेदेखि प्रारम्भ भयो भन्ने बारेमा ऐतिहासिक रुपमा भन्न कठिन छ । आचार्य असंग (सन् २८०-३६०) ले आफ्नो महायान सूत्रालंकार ग्रन्थमा सर्वप्रथम आदर्शादि ज्ञानको बारेमा सविस्तार उल्लेख गरेको पाइन्छ । त्यसैगरी तन्त्रग्रन्थमा सर्वप्रथम करिव तेश्रो चौंथो शताब्दीतिरको गुहयसमाजतन्त्रमा पञ्चतथागत र पञ्चज्ञानको बारेमा वर्णन गरिएको छ । तर गुहयसमाज तन्त्रमा पञ्चतथागत र उसको ज्ञान पञ्चज्ञानलाई *'पञ्चस्कन्धाः समासेन पञ्चबुद्धाःप्रकीर्तिताः'*[80] भनी पञ्चस्कन्धको प्रतीकको रुपमा वर्णन गरिएको छ ।

त्यस्तै ज्ञानसिद्धि ग्रन्थमा *'पञ्चबुद्धस्वभावत्वात् पञ्चस्कन्धा जिना स्मृताः'*[81] अर्थात पञ्चबुद्ध स्वभाव भएको कारणले नै पञ्चस्कन्ध पञ्चजिन स्वरुप हो भनी वर्णन गरिएको छ । तसर्थ तन्त्रशास्त्रमा समस्त जगतलाई पञ्चबुद्धात्मक मानिएको छ । पञ्चबुद्ध तथा पञ्चज्ञानबारे चर्चा गर्नु भन्दा अगाडी पञ्चबुद्धात्मक श्रीस्वयम्भूधर्मधातु वागीश्वरको चर्चा गर्नु उपयुक्त हुनेछ ।

श्रीस्वयम्भूधर्मधातुवागीश्वर उत्पत्ति भएको कारण नेपालमण्डल को संस्कृतिमा श्रीस्वयम्भूज्ञान साक्षात्कार गर्दै जाने अनुरुपको संस्कृति विकास भयो । यसैको कारण विपश्वी, शिखि, विश्वभू, क्रकुच्छन्द, कनकमुनि, काश्यप, शाक्यमुनि बुद्धहरु र अनेक बोधिसत्व, विद्वान, पण्डित, आचार्य, भिक्षुहरु यहाँ आई पञ्चबुद्धात्मक श्रीस्वयम्भू दर्शन पूजन गरी जानु भयो जसबारे वृहत् स्वयम्भू पुराणमा सविस्तार वर्णन गरिएको छ ।

---

[80] पूर्वोक्त टिप्पणी नं. १९, पृ. १११ ।

[81] पूर्वोक्त टिप्पणी नं. १७, पृ. १०३ ।

श्रीस्वयम्भू चैत्यको प्रभावले नेपालमण्डलका अनेक ठाउँमा चैत्य र धर्मधातुमण्डल प्रस्थापन गर्ने कार्य भए । पञ्चबुद्धात्मक श्रीस्वयम्भूज्ञान आर्जन गर्ने परम लक्ष्य लिई यहाँका बौद्ध धर्मानुयायीहरुले आफ्नो जीवन पद्धतीलाई यस अनुरुप अगाडी बढाए । यहाँको कुनै पनि धार्मिक एवं सामाजिक कार्यमा पनि श्रीस्वयम्भूको प्रतीक स्वरुप पञ्चबुद्धसंग आवद्ध गरी पञ्चबुद्धहरुको कुलबाट उत्पन्न अनेक देवीदेवताहरुको भावना गरी पूजा गर्नु पर्ने परम्परा छ र यहाँको जनजीवनमा जन्मदेखि मरणोपरान्त पञ्चबुद्धको ज्ञान दर्शनसंग सम्बन्धित संस्कृतिलाई अंगाली सबैको कल्याण र हितकार्य तर्फ उन्मुख भैरहेका हुन्छन् ।

पञ्चज्ञानको प्रतीकको रुपमा श्रीस्वयम्भू महाचैत्यलाई आदिबुद्ध, श्रीस्वयम्भू, ज्योतिरुप धर्मधातु वागीश्वर आदि विविध नामले स्मरण गरी नित्य वन्दन पूजा गर्दै आइरहेको छ भनेर दोह-याई रहनु यहाँ आवश्यक नपर्ला । यी विभिन्न नाम मध्ये श्रीस्वयम्भू चैत्यलाई शून्य, निरञ्जन, शुद्ध, शान्तको प्रंतीक स्वरुप आदिबुद्ध, बोधिचित्त महाकरुणाको प्रतीक स्वरुप समन्तभद्रको रुपमा स्मरण गर्दै आइरहेको पाईन्छ । त्यस्तै प्रभाश्वर धर्मकाय वज्रधरको रुपमा ज्योतिरुप, विशुद्धता र परिपूर्णताको रुपमा धर्मधातु तथा अनुत्तरबोधि सर्वज्ञानको रुपमा महामञ्जुश्री अर्थात् नामसंगीतिको रुपमा वन्दना पूजन गर्दै आईरहेका छन् ।[82]

बृहत् स्वयम्भू पुराण अनुसार कुनै समयमा नागदह भएको यस नेपालमण्डलमा विपश्वी तथागतले आफ्नो दिव्यचक्षुद्वारा ज्योतिरुप आदिबुद्ध श्री स्वयम्भू धर्मधातु वागीश्वर प्रादुर्भाव हुने कुरा थाहापाई (आसनको रुपमा) कमलको पट्टाको बीजारोपन गरी त्यसबाट सहश्रदलको पट्ट फुलाउनु भयो । यही पट्टमाथि ज्योतिरुप आदिबुद्धको आत्मज स्वरुप सबभन्दा पहिले पञ्चवीजाक्षर -ॐ, हूँ त्राँ, ह्रिं, खँ, यी पाँच अक्षर उत्पन्न भए । यी बीजाक्षर श्वेत, नील, पीत, रक्त, हरित गरी पञ्चरंगी पञ्चरश्मिमा परिणत भए । यहिं पञ्चरश्मिबाट नै पञ्चबुद्ध प्रादुर्भाव भए । ती पाँच बुद्धहरु हुन्- वैरोचन, अक्षोभ्य, रत्नसम्भव, अमिताभ र अमोघसिद्धि ।[83]

पञ्चतथागतको उत्पत्ति र तिनीहरुको वर्ण, बीजाक्षर, मुद्रा, दिशा आदि ध्यान ज्ञानलाई लिएर अद्वयवज्र संग्रहमा यसरी वर्णन गरीएको छ -

---

[82] पूर्वोक्त टिप्पणी नं. ७०, पृ. १९ ।

[83] पूर्वोक्त टिप्पणी नं. ३४, पृ. २४, २५ ।

*'मण्डलाधिष्ठितभूभागे चतुरश्रादिचतुर्णामन्यतमभिमतमण्डलकं कृत्वा तन्मध्ये विश्ववर्णाष्टदलकमलवरटके सूर्यमण्डलोपरि नीलहूँकारपरिनिष्पन्नं भूस्पर्शमुद्राधरं कृष्णवर्णमक्षोभ्यम्, तदनु पूर्वदले शुक्लकारनिष्पन्नं शुक्लवर्णं बोध्यङ्गीमुद्राधरं वैरोचनम्, ततो दक्षिणदले पीतत्राँकारजं पीतवर्ण वरदमुद्राधरं रत्नसम्भवम्, ततः पश्चिमदले रक्तह्रीँकारसम्भूतं रक्तवर्ण समाधिमुद्राधअममिताभम्, ततः उत्तरदले श्याम खँकारजं श्यामवर्णअभयमुद्राधरअमोघसिद्धि च भावयित्वा . . . . . . ।'* [84]

भावार्थ,

'भूमण्डल अधिष्ठान गरी उक्त मण्डल माथि विश्ववर्ण अष्टदल कमल भावना गरी (त्यसमा) उत्पन्न भएको (इ) सूर्यमण्डल (उत्पन्न भई त्यसको पनि) माथि नीलहूँकार (बीजाक्षर) परिवर्तन भई भूस्पर्शमुद्रा धारण गरेको कृष्णवर्ण अक्षोभ्यको, त्यस्तै पूर्वदलमा शुक्ल कार (बीजाक्षर) परिवर्तन भई बोध्यङ्गीमुद्रा धारण गरेको शुक्ल वर्णको वैरोचन, दक्षिण दलमा पीतत्राँकार (बीजाक्षर) परिवर्तन भई वरदानमुद्रा धारण गरेको पहेलोवर्णको रत्नसम्भव, त्यस्तै पश्चिम दलमा रक्तह्रीँकार (बीजाक्षर) बाट समाधिमुद्रा धारण गरेको रक्तवर्णको अमिताभ, उत्तरदलमा श्याम खँकार ( बीजाक्षर) बाट अभयमुद्रा धारण गरेको हरित वर्णको अमोघसिद्धि भावना गर्नुपर्दछ ।'

पञ्चबुद्धहरुको प्रादुर्भावपछि उनीहरुसंग सम्बन्धित दर्शनज्ञानका विविध विषयहरुको पनि विकास भयो । वास्तवमा पञ्चबुद्धहरु पञ्चज्ञान अर्थात आदर्शज्ञान, समताज्ञान, प्रत्यवेक्षणाज्ञान, कृत्यानुष्ठानज्ञान र सुविशुद्धधर्मधातुज्ञानको प्रतिकात्मक स्वरुप हुन् । विभिन्न बौद्ध ग्रन्थादिमा पञ्चबुद्धसंग सम्बन्धित स्वभावज्ञान, लक्षणज्ञान सम्बन्धी आदि विविध विषयहरु बारे उल्लेख भएका छन् । पञ्चतथागतको पञ्चज्ञानको सन्दर्भमा धर्मसंग्रह- महायान सूत्र संग्रहमा यसरी उल्लेख गरिएको छ -

*'पञ्चज्ञानानि । तद्यथा- आदर्शनज्ञानम्, समताज्ञानम्,*
*प्रत्यवेक्षणाज्ञानम्, कृत्यानुष्ठानज्ञानम्,सुविशुद्ध धर्मधातुज्ञानं चेति ।'* [85]

---

[84] पूर्वोक्त टिप्पणी नं. २१, पृ. ५ ।
[85] पूर्वोक्त टिप्पणी नं. १८, पृ. ५ ।

आर्यमञ्जुश्रीनामसंगीति टीका नाममन्त्रार्थावलोकिनीमा पनि आर्दशादि पञ्चतथागत स्वभाव स्वरुपको बारे यसरी वर्णन गरिएको पाइन्छ -

*'सुविशुद्धधर्मधातुज्ञानं महावैरोचन स्वभावेन । आदर्शज्ञानअक्षोभ्य स्वभावेन । प्रत्यवेक्षणज्ञानअमिताभ स्वभावेन । समताज्ञानं रत्नसंभव स्वरुपेण । कृत्यानुष्ठानज्ञानअमोघसिद्धि स्वभावेन । पंञ्चतथागत मुखेन ज्ञान स्तुति ।'*[86]

पञ्चतथागतको आर्दशादि पञ्चज्ञानलाई हेतुज्ञान, प्रत्ययज्ञान, धर्मज्ञान, भावनाज्ञान र मुक्तिज्ञानको रुपमा पनि वर्णन गरिएको पाइन्छ -

*'हेतुरादर्शज्ञानम्, प्रत्ययः समताज्ञानम्, प्रत्यवेक्षणा धर्मज्ञानंम्, । कृत्यानुष्ठानंभावनाज्ञानम्, मुक्तिज्ञानं सुविशुद्धधर्मधातुज्ञानम्'*[87] ॥

त्यस्तै हेवज्रतन्त्रमा पञ्चबुद्धको विशुद्धि प्रज्ञामुद्राको रुपमा चक्री, कुण्डल, कण्ठी, रुचक, मेखला पञ्चाभूषणको बारेमा यसरी उल्लेख गरिएको छ-

*'चक्री कुण्डल कण्ठी च हस्ते रुचक मेखला ।*
*पञ्चबुद्ध विशुद्धया च प्रज्ञामुद्राः प्रकीर्तिता ।'*[88] ॥

(हे. त. १. ३. १४, ८.१७)

पञ्चबुद्ध पञ्चज्ञानकायको रुपमा पञ्चस्कन्ध अर्थात् रुप, वेदना, संज्ञा, संस्कार र विज्ञानका विषयमा'अचिन्त्याद्वयक्रमोपदेश'मा यसरी उल्लेख गरीएको छ –

*'संस्कारो वेदना संज्ञा रुपं विज्ञानमेवच ।*
*पञ्चज्ञानमयः कायः पञ्चबुद्धोऽद्वयोत्तम ॥*[89]

(अ.क्र. ७३)

पञ्चबुद्धका शक्तिका रुपमा परिचित पञ्चताराको नाम अद्वयवज्र संग्रह ग्रन्थमा यसरी उल्लेख गरीएको पाइन्छ–

---

[86] पूर्वोक्त टिप्पणी नं. २ ।
[87] पूर्वोक्त टिप्पणी नं. १, पृ. ९७ - ९८
[88] एस. डि, स्नेलग्रोव, *हेवज्रतन्त्र,* लण्डन ओरियण्टल सिरिज, लण्डन, १९५९), पृ.
[89] पूर्वोक्त टिप्पणी नं. १७, पृ.

*'लोचनी मामकी पाण्डरवासिनी तारिणीनां मध्ये वज्रधात्वीश्वरी (वज्रदेवी) नायिका ।*[90]

(अ. व. सं. पृ. ४३)

मन्त्रार्थावलोकिनीटीका ग्रन्थमा पञ्चबुद्धको आसन, चरितको बारेमा यसरी वर्णन गरेको पाइन्छ -

*'पूर्वादिक्षुसर्वास्तु अक्षोभ्यादि नाञ्चविस्तरम् । तत्रासनं विकल्पेत मध्ये सिंहासनं वरम् । पूर्व गजासनं ज्ञेयं दक्षिणे तुरंगासनम् । पश्चिमे मयूरासनं, उत्तरे गरुडासनमिति ।*[91]

अर्थात् ,

'अक्षोभ्य आदि पञ्चबुद्धहरुको आसनमा मध्य दिशामा सिंहासन (वैरोचन बुद्ध), पूर्व दिशामा हात्ती आसन (अक्षोभ्य बुद्ध), दक्षिण दिशामा घोडा आसन (रत्नसम्भव बुद्ध), पश्चिम दिशामा मयूर आसन (अमिताभ बुद्ध), उत्तर दिशामा गरुड आसन गरी (अमोघसिद्धि बुद्ध) रहनु हुन्छ ।'

पञ्चज्ञान आर्जन गर्ने क्रममा बाधाको रुपमा आउने पञ्च चरितको बारेमा यसरी वर्णन गरिएको पाइन्छ –

*'राग चरितानां अयममिताभ स्वभाव । महाद्वेषो ऽक्षोभ्य । महाक्रोढ इयममोघसिद्धिः । महालोभो रत्नसम्भवः । महामोह वैरोचन ।*[92]

अर्थात्,

'वैरोचन, अक्षोभ्य, रत्नसम्भव, अमिताभ र अमोघसिद्धि तथागतको चरित स्वभाव क्रमशः महामोह, महाद्वेष, महालोभ अथवा महामात्सर्य, महाराग र महाक्रोध अथवा कौशिद्य हुन् ।'

यसरी नै अद्वयवज्र संग्रहमा पञ्चज्ञानात्मक पञ्चतथागत स्वभावको पञ्च अभिषेकको बारेमा यसरी वर्णन गरीएको पाइन्छ–

*'... उदकाभिषेक आदर्शज्ञानात्मकोऽक्षोभ्य स्वभावः । मुकुटाभिषेकः समताज्ञानात्मको रत्नसम्भव स्वभावः । वज्राभिषेकः प्रत्यवेक्षणा-ज्ञानात्मकोऽमिताभ स्वभावः । अधिपत्याभिषेक (घण्टाभिषेक) कृत्यानुष्ठान रुपोऽमोघसिद्धि स्वभावः । नामाभिषकोऽविद्यानिरोधाद् विद्यानुगता विशुद्ध धर्मधातुज्ञानात्मको वैरोचन स्वभाव ।*[93]

---

[90] पूर्वोक्त टिप्पणी नं. २१, पृ. ४३

[91] पूर्वोक्त टिप्पणी नं. २ ।

[92] पूर्वोक्त टिप्पणी नं. २ ।

पञ्चबुद्धसंग संबन्धित विविध ज्ञान, ध्यान, कूल आदिका बारेमा 'पञ्चाकाराभिसम्बोधि' ग्रन्थमा सविस्तार वर्णन गरेको पाइन्छ ।[94] माथि उल्लेखित विभिन्न ग्रन्थादिमा वर्णित पञ्चबुद्ध र सो संग सम्बन्धित विविध विषयहरुलाई निम्न तालिकाको माध्यमबाट स्पष्ट गर्न अरु सजिलो हुनेछ ।

पञ्चबुद्ध तथा सोसंग सम्बन्धित ज्ञान, चिन्ह, कुलादिको वर्णन

| बुद्ध | ज्ञान | ज्ञान | चिन्हकुल | वर्गकुल | तारा | वर्ण | तत्व=धातु | स्कन्ध |
|---|---|---|---|---|---|---|---|---|
| १. वैरोचन | सुविशुद्धधर्मधातु | मुक्ति | चक्र | कुलत्रय | वज्रतारा | श्वेत | जल | रुप |
| २. अक्षोभ्य | आदर्श | हेतु | वज्र | लोकालोक | लोचनी | नील | आकाश | विज्ञान |
| ३. रत्नसंभव | समता | प्रत्यय | रत्न | महोष्णीष | मामकि | पीत | पृथ्वी | वेदना |
| ४. अमिताभ | प्रत्यवेक्षणा | धर्म | पद्द | लोकालोकोत्तर | पाण्डरा | रक्त | अग्नि | संज्ञा |
| ५. अमोघसिद्धि | कृत्यानुष्ठान | भावना | विश्ववज्र | मन्त्रविद्याधर | आर्यतारा | हरित | वायु | संस्कार |

| मुद्रा | दिशा | वाहन | समय | गुणरुप | चरित्र | इन्द्रिय | आकार | भुवन | वोधिसत्व | वीजाक्षर |
|---|---|---|---|---|---|---|---|---|---|---|
| बोध्यङ्ग | मध्य | सिंह | ब्रम्हमूर्हत | शान्त | मोह | चक्षु | वर्तुल | अकनिष्ठ | समन्तभद्र | ॐ |
| भूस्पर्श | पूर्व | हात्ति | सुप्रभात | ज्ञान | द्वेष | श्रोत | शुन्य | अभिरति | वज्रपाणि | हूँ |
| वरद | दक्षिण | घोडा | मध्यान्ह | वरद | मात्सर्य | घ्राण | चतुष्कोण | रत्नावति | रत्नपाणि | त्रां |
| ध्यान | पश्चिम | मयूर | अपरान्ह | करुणा | राग | जिव्हा | त्रिकोण | सुखावति | पद्दपाणि | ह्रिं |
| अभय | उत्तर | गरुड | रात्री | विद्या | कौशिद्य | काय | धनुष | अमोघवति | विश्वपाणि | खं |

| पंचोपचार | पंचोपहार | भूषण | रत्न | अभिषेक | वर्णाक्षर | पञ्चबुद्धसंग सम्बन्धित देवता |
|---|---|---|---|---|---|---|
| पुष्प | रुप | चक्री | मोति | कलश | 'क' वर्ग | श्वेत वर्ण देवता |
| धूप | शब्द | कुण्डल | नीर | मुकुट | 'च' वर्ग | नील वर्ण देवता |
| दीप | गन्ध | कण्ठि | हिरा | वज्र | 'ट' वर्ग | पीत वर्ण देवता |
| गन्ध | रस | रुचक | मुगा | घण्टा | 'त' वर्ग | रक्त वर्ण देवता |
| रस | स्पर्श | मेखला | पन्ना | नाम | 'प' वर्ग | हरित वर्ण देवता |

माथि तालिकामा उल्लेखित विविध विषयहरु पञ्चबुद्धसंग सम्बन्धित दर्शनज्ञान हुन् । पञ्चस्कन्ध, पञ्चतत्व आदि पञ्चबुद्धहरु पञ्चज्ञानकै

---

[93] पूर्वोक्त टिप्पणी नं. २१, पृ. ३६,३८ ।

[94] पूर्वोक्त टिप्पणी नं. ६९, पृ. २०-२४ ।

अनेकन् प्रतिकात्मक स्वरुप हुन् । पञ्चज्ञानको पूर्णतानै अनन्त्वगत्वा बुद्धत्व लाभ गर्नु हो । त्यसैले पञ्चज्ञानलाई बुद्धत्वज्ञान भनिएको हो ।

हेवज्रतन्त्र, कालचक्र, विमलाप्रभा, त्रिचक्र समाधि ज्ञानसिद्धि, गुह्यसमाजतन्त्र आदि बौद्धतन्त्र ग्रन्थहरुमा पञ्चज्ञानको उल्लेख ठाउँ ठाउँमा भई रहेको पाइन्छ । आर्यमञ्जुश्रीनामसंगीतिमा भने पञ्चज्ञानको लक्षण आदिको वर्णन गरिएको छ । यसमा पञ्चज्ञानको विषय वस्तुलाई आर्यमञ्जुश्रीको रुपमा परिलक्षित गरिएको छ । प्रस्तुत पुस्तकको मूल विषय पञ्चबुद्ध र पञ्चज्ञानको भएकोले यहाँ सो सम्बन्धी चर्चा हुनु सान्दर्भिक देखिन्छ ।

## ८.१. वैरोचन तथागत

पञ्चबुद्ध अर्थात् पञ्चतथागतको रुपकायको रुपमा स्वयम्भू महाचैत्य तथा सोहि महाचैत्यको प्रतीक स्वरुप विभिन्न विहार एवं स्थानमा स्थापना भई रहेका चैत्यहरुका चारै दिशाका मूर्तिहरु देख्न सक्छौं । पञ्चतथागत मध्ये वैरोचन पनि एक हो । वैरोचन तथागत मध्य दिशामा रहनुहुन्छ । अज्ञान छेदन स्वरुपी चक्रकुल तथा ॐकार वीजाक्षरबाट उत्पन्न वैरोचनको मुद्रा बोध्यङ्ग हो । जलतत्वका वहाँ वर्णमा सेतो हुनुहुन्छ । त्यस्तै वहाँको बाहन सिंह हो र मूल बोधिसत्वमा समन्तभद्र हो । वैरोचनको ज्ञान मुक्तिज्ञानको रुपमा सुविशुद्ध धर्मधातु ज्ञान हो ।

शुल्कवर्ण ॐकारबाट उत्पन्न मध्य दिशाको सिंहासनमा बोध्यङ्गमुद्रामा आसित भैरहने वैरोचनको बारेमा बौद्ध स्तोत्र संग्रहमा यसरी वर्णन गरिएको छ-

*ॐकारोत्पन्न शुक्लाभे मध्यसिंहासनास्थितम् ।*
*बोध्यङ्गी त्रिमुद्रया युक्तम् वैरोचनमुनि नमः ॥१॥*[95]

त्यस्तै मध्य वैरोचन नामक बौद्धस्तोत्रमा पनि वैरोचनको बारेमा उल्लेख छ -

*'मध्य वैरोचनो बुद्ध मध्य समन्तभद्रक ।*
*मध्य सिंहासनं पद्म स्वेतवर्ण नमोस्तुते ॥१॥*[96]

---

[95] *बौद्ध स्तोत्र संग्रह,* (हस्तलिखित ग्रन्थ)
[96] *मध्य वैरोचन नाम बौद्ध स्तोत्र संग्रह,* (हस्तलिखित ग्रन्थ)

वैरोचनको स्वभाव शुद्धज्ञान, दिव्यमानको स्वभावको ज्ञान भनी वैरोचन शब्दार्थ गरिएको छ -

*'लोचना वज्रसत्वानां दीव्यमानास्वभावतः ।*
*ज्ञानं तथागतं शुद्धं तव्द्वैरोचनमुच्यते ॥'*[97] (ज्ञा. सि. १५.५)

### ८.२. सुविशुद्धधर्मधातुज्ञान

सत्वप्राणीहरुलाई दुई प्रकारका आवरण-क्लेशावरण र ज्ञेयावरणले छोपिराखेको हुन्छ । चित्तलाई छोपि राख्ने, ढाकिराख्ने लाई आवरण भनिन्छ । राग, द्वेष, अविद्या (मोह वा अज्ञान), मान (अभिमान), कुदृष्टि (मिथ्यादृष्टि), विचिकित्सा (धर्ममा शंका)- यी ६ वटा क्लेशलाई क्लेशावरण भनिन्छ ।[98] त्यस्तै नाना प्रकारका जान्न योग्य, ज्ञान गर्न योग्य विषयवस्तुहरुलाई ज्ञेय भनिन्छ । यसरी जान्न वा ज्ञान गर्ने कुरा मनमा आउने वा आई नै रहनेलाई ज्ञेयावरण भनिन्छ ।[99]

आवरण मध्ये क्लेशावरण क्षय भएमा अर्हत्व लाभ हुन्छ । जव दुइटै आवरण क्लेशावरण र ज्ञेयावरण क्षय हुन्छ तब बुद्धत्व लाभ हुन्छ । वज्रयान अनुसार दुवै आवरणबाट जो सदा मुक्त हुन्छ, त्यो वज्रसत्व कहलिन्छ । यही वज्रसत्व समानको ज्ञानलाई नै सुविशुद्ध धर्मधातु ज्ञान भनिन्छ ।[100]

क्लेशावरण र ज्ञेयावरणबाट सदा मुक्त भइसकेका वज्रसत्वको ज्ञाननै सुविशुद्ध ज्ञान हो । आचार्य इन्द्रभुटिपादले 'ज्ञानासिद्धि तन्त्र'मा सुविशुद्धज्ञानको लक्षण विषयलाई लिएर भनेका छन्-

*'क्लेशज्ञेयावृतं सर्वसदा मुक्तं भवेत् तदा ।*
*सुविशुद्धमिति ख्यातं वज्रिणां वरयोगिनाम ॥'*[101]

(ज्ञा.सि. १.५३)

---

[97] पूर्वोक्त टिप्पणी नं. १७, पृ. १३७
[98] पं. दिव्यवज्र वज्राचार्य (सं.), *धर्मसंग्रह कोष,* (काठमाडौं, २०३६), पृ. २२
[99] ऐजन, पृ. ९
[100] पूर्वोक्त टिप्पणी नं. १, पृ. (xxxviii)
[101] पूर्वोक्त टिप्पणी नं. १७, पृ. ९८

सर्वधर्म शून्यता अर्थात् निःस्वभावताको बारेमा ज्ञान भएपनि सत्वप्राणीहरु छन् भनि भ्रममा पर्न सक्छ । जब सर्वधर्म शून्यता अर्थात् वस्तुको स्वभाव केहि छैन भनी यथार्थ रुपले अंगीकार गर्ने ज्ञाननै धर्मधातुज्ञान हो । यो ज्ञान पूर्णरुपले बुझिसकेपछि मन मुक्त हुन्छ र त्यहि शुद्ध भएको मनलाई साक्षात्कार गर्ने ज्ञानलाई 'सुविशुद्धधर्मधातुज्ञान' भनिन्छ ।

सुविशुद्ध धर्मधातुज्ञानको स्वभाव बारे अमृतकनिकामा उल्लेख गरिएको छ । त्यसमा उल्लेखित पञ्चाकारज्ञानस्तवको श्लोकलाइ उद्धरण गर्नु प्रासांगिक हुनेछ-

*'विज्ञानधर्मतातीता ज्ञानशुद्ध ह्यनाबिलाः ।*
*प्रकृति पभाश्वरा धर्मा धर्मधातुगतिं गताः ॥'*[102]

अर्थात,

यो ज्ञानको स्वभाव अनाविल, शुद्धज्ञान, अतीता, धर्मता, विज्ञान तथा प्रकृति प्रभाश्वर छ । यही ज्ञानलाई लिएर आचार्य पद्मवज्रले गुह्यसिद्धितन्त्रमा लेख्नु भएको छ -

*'आकाशलक्षणं दिव्यं सर्वसङ्कल्पवर्जितम् ।*
*ज्ञानं सर्वत्र संशुद्धमादिमध्यान्तनिर्मलम् ॥'*[103]

(गु.सि. ४.१०)

अर्थात,

अर्थात,

यो ज्ञान आकाश जस्तै सबै लक्षणले रहित, आदि मध्य शुद्ध र निर्मल छ ।

त्यसकारण धर्मधातुज्ञान विशुद्धतम विषयक, शून्यताज्ञान, सर्वधर्मयुक्त शून्यता ज्ञान हो । अर्को अर्थमा भन्नुपर्दा कुनै पनि वस्तुको वास्तविक ज्ञान अर्थात् संारमय प्रकृति अथवा वस्तुको स्वभाव ज्ञाननै धर्मधातुज्ञान हो ।

धर्मधातुज्ञान बुझ्नु भनेको तथागतलाई बुझ्नु हो । तथागत गर्भ भनेको सर्वधर्मको पवित्र स्थल, जिनहरुको वासस्थान- जिनालय तथा

---

[102] पूर्वोक्त टिप्पणी नं. १, पृ. ९८
[103] पूर्वोक्त टिप्पणी नं. १७, पृ. ९८

पञ्चबुद्धात्मक आश्रयस्थल हो । यी सबै धर्मधातु कहलिन्छन् । त्यस्तै प्रभाश्वर, पञ्चरश्मि, शून्यरुप, स्वयम्भूलाई पनि धर्मधातु नै भनिन्छ ।[104]

सुविशुद्ध धर्मधातुज्ञानका बारेमा नामसंगीति गाथामा २५ वटा श्लोकले वर्णन गरिराखेको छ । ती श्लोकहरुमा जम्मा १८१ मन्त्राक्षर पद समाहित छन् । प्रत्येक श्लोकले मञ्जुश्रीलाई परिलक्षित गरी वैरोचन तथागतसंग सम्बन्धित सुविशुद्धधर्मधातुज्ञानको स्वभाव वर्णन गरिएको छ । नामसंगीतिमा वर्णित सुविशुद्धधर्मधातुज्ञान गाथापरिच्छेदमा उक्त ज्ञानलाई दशपारमिता पूर्ण गर्ने मार्ग उपाय स्वरुप दश ज्ञान विशुद्धि गर्ने आधारका रुपमा अनुत्तर सम्यक् सम्बोधि ज्ञानको वर्णन गरिएको छ । यो ज्ञान विशुद्ध ज्ञान भएको हुनाले भव संसारलाई पार गर्ने (ज्ञानको रुपमा वर्णन गर्दै यसलाई) 'जनक सर्वबुद्धानां' अर्थात सबै बुद्धको जनक ज्ञानका रुपमा प्रस्तुत गरिएको छ ।

नामसंगीतिको सुविशुद्ध धर्मधातुज्ञान गाथामा यस ज्ञानको स्वभाव लक्षण बारे यसरी  उल्लेख गरिएको पाईन्छ-

*'अनादिनिष्प्रपञ्चात्मा शुद्धात्मा तथतात्मकः ।*
*भूतवादी यथावादी तथाकारी अनन्यवाक् ॥५॥*

(ना.सं. ६.५)

अर्थात,

आदि उत्पन्न नभएको, प्रपञ्चरहित अर्थात् पञ्चस्कन्ध, द्वादश आयतन, अष्टादश धातु ग्रहण गर्ने लक्षण धर्मरहित, शुद्ध एवं तथता स्वभावको ज्ञान गर्ने (यो) ज्ञान हो ।

सुविशुद्ध धर्मधातुज्ञानको विषयलाई लिएर नामसंगीतिको एउटा अर्को श्लोकमा भनिएको छ-

*'संसारपारकोटिस्थः कृत्यकृत्यः स्थलस्थितः ।*
*कैवल्यज्ञान निष्ठ्यूतः प्रज्ञाशस्त्रो विदारणः ॥१३॥*

(ना.सं.६.१३)

संसार पारको अग्रभाग भएको, गर्नुपर्ने सबै पूर्ण भई सकेको, निर्वाण सन्मूख पुगीसकेको तथा प्रज्ञा ज्ञानरुपी शस्त्रले क्लेश छेदन भईसकेको ज्ञान सुविशुद्ध धर्मधातुज्ञान हो ।

---

[104] पूर्वोक्त टिप्पणी नं. २ ।

अर्को एक श्लोकमा बुद्धको पञ्चकाय एवं पञ्चज्ञानको आत्मज स्वरुप भएको तथा पञ्चबुद्धको मुकुट र पंचचक्षु स्वरुपको भनि सुविशुद्ध धर्मधातुज्ञानबारे यसरी वर्णन गरिएको छ-

*'पञ्चकायात्मको बुद्धःपञ्चज्ञानात्मको विभुः ।*
*पञ्चबुद्धात्ममुकुटः पञ्चचक्षुरसङ्गधृक् ॥१८॥*

(ना.सं. ६.१८)

नामसंगीतिका टीकाकारहरुले सुविशुद्ध धर्मधातु ज्ञानलाई मुक्तिज्ञानको रुपमा वर्णन गरेका छन् । आदर्शादि पूर्णताले प्राप्त हुने, मुक्त हुने ज्ञान भएकोले यसलाई सुविशुद्ध धर्मधातु ज्ञान भनिएको हो ।[105]

**८.३. अक्षोभ्य तथागत**

अक्षोभ्य तथागतको रूपकायको रूपमा चैत्यादिमा पूर्वाभिमुख गरी स्थापना गरेको मुर्तिलाई देख्न सक्छौं । भूस्पर्श मुद्रा गरी हात्ति माथि आसन गरी वज्रासनमा बस्नु हुने अक्षोभ्य तथागत नील वर्णको हुनुहुन्छ । अच्छेद्य, अभेद्य, अविनासि स्वरुप वज्रकुलको अक्षोभ्य तथागत हूँ वीजाक्षरबाट उत्पन्न भएको हो । अपरिवर्तनीय, निर्लक्षणको प्रतीक आकाशतत्व, नीलो वर्णको अक्षोभ्यको ज्ञान आदर्शज्ञान हो ।

अक्षोभ्य तथागतको स्वभाव अप्रकम्प्य स्वभावको बारेमा आचार्य इन्द्रभूतिपादले ज्ञानसिद्धि तन्त्रमा भनिएको छ-

*अप्रकम्प्य स्वभावत्वात् अक्षोभ्योऽसौ प्रकथ्यते ।*[106]

(ज्ञा.सि. १६.६)

त्यस्तै अक्षोभ्य हूँकारबाट उत्पन्न भई हात्ति आसनमा भूस्पर्श मुद्रा गरी पूर्वमा विराजित भएको वर्णन गर्दै बौद्धस्तोत्र संग्रहमा यसरी वर्णन गरिएको छ -

*हूँकारोत्पन्न नीलाभं पूर्वे गजासनस्थितम्*
*भूस्पर्श मुद्रया युक्तम् अक्षोभ्यं श्रीघनं नमः ॥ २ ॥*[107]

अक्षोभ्यकै बारेमा बौद्धस्तोत्रमा वज्रपाणिसँग पूर्वमा विराजित हुनुभएको भनि वर्णन गरिएको छ-

---

[105] पूर्वोक्त टिप्पणी नं. १, पृ. ९७ - ९८ ।
[106] पूर्वोक्त टिप्पणी नं. १७, पृ. १३७ ।
[107] पूर्वोक्त टिप्पणी नं. ९५,

*'पूर्व अक्षोभ्य संभव वज्रपाणि महाबल ।*
*गजबाहान सम्पूर्ण नीलवर्ण नमोस्तुते ॥ २ ॥* [108]

८.४. **आदर्शज्ञान**

आकाश जस्तै निराधार, व्यापक एवं लक्षणरहित ज्ञानलाई 'आदर्शज्ञान' भनिन्छ । 'आदर्शज्ञान'लाई वज्रज्ञान, समन्तभद्रज्ञान, महामुद्रा धर्मकाय ज्ञान आदि अनेक ज्ञानको रुपमा नामसंगीतिमा वर्णन गरेको पाइन्छ । आदर्श अर्थात् ऐनामा देखिने रुपको प्रतिविम्बझैं हाम्रो ह्दयमा पनि आदर्शज्ञान उत्पत्ति भएमा धर्मकायको प्रतिविम्ब देख्न सकिन्छ । वास्तवमा आदर्श ज्ञान भन्नु नै धर्मकाय ज्ञान हो । अतः यस ज्ञानलाई 'आदर्शज्ञान' भनि नामाकरण गरिएको हो ।[109]

कुनै कुनै बौद्ध तन्त्रग्रन्थहरुमा अक्षोभ्य तथागतको ज्ञानलाई आदर्श ज्ञानको सत्ता सुविशुद्ध धर्मधातुज्ञानको रुपमा वर्णन गरिएको भेटिन्छ भने वैरोचनको ज्ञान सुविशुद्धधर्मधातु ज्ञानको सत्ता आदर्श ज्ञानको रुपमा चर्चा गरिएको पाइन्छ । गुह्यसमाजप्रदिपोद्योतन टीकामा अक्षोभ्य तथागतलाई आकाश चित्त, सुविशुद्धधर्मधातुज्ञान स्वभावका भनी वर्णन गरिएको पाइन्छ -

*'आकाशचित्तोक्ऽक्षोभ्यः, सुविशुद्धधर्मधातु स्वभावत्वात्'* [110]

(गु. स. प्र. ९)

तर नामसंगीति ग्रन्थमा वैरोचन तथागतलाई सुविशुद्धधर्मधातुज्ञान तथा अक्षोभ्य तथागतलाई आदर्श ज्ञानको रुपमा व्याख्या गरिएको छ ।

अक्षोभ्य तथागतको आदर्शज्ञानलाई धर्मकाय, प्रतिविम्बित लक्षण स्वभावको ज्ञान हो भनि ज्ञानसिद्धि तन्त्रमा वर्णन गरिएको छ-

*'धर्मकायमिदं ज्ञेयमादर्शज्ञानमित्यपि ॥ ४८ ॥*
*प्रतिबिम्बं तथादर्शे स्वकीयं दृश्यते ध्रुवम् ।*
*धर्मकायं तथा ज्ञानं दृश्येतादर्शसंस्थितम् ॥ ४९ ॥'* [111]

(ज्ञा.सि. १.४८-४९)

---

[108] पूर्वोक्त टिप्पणी नं. ९६
[109] पूर्वोक्त टिप्पणी नं. ११, पृ. (ट) ।
[110] पूर्वोक्त टिप्पणी नं. २०, पृ. ५१ ।
[111] पूर्वोक्त टिप्पणी नं. १७, पृ. ९७ ।

माथिको वर्णनबाट आदर्श अथवा ऐनामा देखिनु संज्ञामात्र हो त्यो बास्तविक रुप सच्चा होइन्, सच्चा जस्तो मात्र संस्कार गरी राखेको हो भनि यथार्थ रुपले बुझि (त्यसमा संस्कार नगरी त्यसको) यसलाई स्वभाव नभएको भनि बोध गराउने ज्ञान नै आदर्शज्ञान हो भन्ने कुरा स्प्रष्ट हुन्छ। अतः रुप आदि ६ इन्द्रिय, चक्षु आदि ६ विषय र चर्क्षुविज्ञान आदि ६ विज्ञान यी सबै स्वभाव रहितको हो भनि बुझ्नु पर्दछ।

नामसंगीतिको टिप्पणी 'अमृतकणिका'मा टीकाकार रविश्रीले 'पञ्चाकारज्ञानस्तव' को श्लोकलाई आधार बनाई आदर्शज्ञान भनेको दर्पणमा देखिने कल्पना, शून्यभाव (रुप बिहिन) को रुप जस्तै हो भनि वर्णन गरेका छन्।

*'शून्यो भावसमूहोऽयं कल्पनारुपवर्जितः।*
*दृश्यते प्रतिसेनेव कुमार्या दर्पणे यथा॥'*[112]

आचार्य पट्टवज्रले आफ्नो गुह्यसिद्धितन्त्रमा आदर्शज्ञानलाई बुद्धहरुको लागि नै अविज्ञेय ज्ञान हो भनेर उल्लेख गर्नु भएको छ। अपर्यन्त गुणहरु उत्पन्न हुने यस प्रकारको ज्ञानलाई आदर्शज्ञानको संज्ञा दिइएको छ।

*'बुद्धानामप्यविज्ञेयमपर्यन्तगुणोद्भवम्।*
*ज्ञानं तदुच्यते ह्यत्र श्रीमदादर्शसंज्ञितम्॥'*[113]
(गु.सि. ४.१७)

महायान सूत्रालंकारमा पनि आदर्शज्ञानको स्वभावबारे चर्चा भई रहेको पाईन्छ। असंगले आदर्शज्ञानको स्वभावबारे लेख्नु भएको छ -

*'आदर्शज्ञानमिममापरिच्छिन्नं सदानुगम्।*
*सर्वज्ञेयेष्वसम्मूढं न च तेष्वामुखं सदा॥ २॥*
*सर्वज्ञाननिमित्तत्वान्महाज्ञानाकरोपमम्।*
*सम्भोगबुद्धता ज्ञानप्रतिबिम्बोदयाच्च तत्॥ ३॥'*[114]
(म.सु. ९. १,२)

अर्थात्,

आदर्शज्ञानको स्वरुप अपरिच्छिन्न, सदानुगम र सदा सबै प्रकारको ज्ञेयहरुमा असंमूढताको रुपमा मिल्दछ। सबै ज्ञानहरुको निमित्त भएको कारणले यो ज्ञानलाई महाज्ञानाकरको रुपमा लिइएको छ।

---

[112] पूर्वोक्त टिप्पणी नं. १, पृ. ९८।
[113] पूर्वोक्त टिप्पणी नं. १७, पृ. २९।
[114] पूर्वोक्त टिप्पणी नं. १८, पृ. ४६।

नामसंगीतिमा आदर्शज्ञान गाथाको रुपमा एक पाद सहित दशश्लोकमा आदर्शज्ञान बारे वर्णन गरिएको छ । यस गाथाको प्रत्येक श्लोकले आदर्शज्ञानको वास्तविक स्वभावलाई यथार्थ रुपमा बुझ्नु पर्ने आवश्यकता माथि जोड दिएको छ । रागी वा भोगीहरुको लागि निर्वाण भयंकर विषय हुन सक्छ तर बोधिचित्तमा अभ्यास गर्नेहरुका लागिभने यो सुखकर विषय हुन जान्छ । त्यसैले नामसंगीतिको एउटा गाथा श्लोकमा भनिएको छ कि यो आदर्शज्ञान माररुपी विघ्नको लागि भयंकर यमान्तको रुप हो । अर्थात् यो ज्ञान भयलाई नै भयभित पार्ने भंयकर रुपको छ -

*'यमान्तको विघ्नराजो वज्रवेगो भयंकर ।*
*विघुष्टवज्रो हृव्दज्रो मायावज्रो महोदर ॥२॥*
(ना.सं. ७.२) पृ.२६

त्यस्तै नामसंगीतिको अर्को एउटा श्लोकमा उल्लेख गरिएको छ : -

*'वज्रसत्वो महासत्वो वज्रराजो महासुख: ।*
*वज्रचण्डो महामोदो वज्रहूंकारहूंकृति: ॥५॥'*
(ना.सं. ७.५), पृ.५०

यस श्लोकलाई लिएर आदर्शज्ञानको बारेमा अमृतकणिका नामसंगीतिको टिप्पणीमा यो ज्ञान अभेद्यबोधिचित्त रुपको वज्रसत्व जस्तो, बोधिचित्तमा अविच्छिन्न प्रवाह ज्ञानविन्दु रुपी महासत्व जस्तो, महासुख रुपी वज्रराज जस्तो, अप्रतिष्ठित सुख निवार्ण गतिवेग रुपी वज्रचण्डो आदि जस्तो छ भनि वर्णन गरिएको छ ।[115]

नामसंगीतिका टीकाकारहरुले यो ज्ञान सबै ज्ञानको निमित्तज्ञान भएको हुनाले यसलाई हेतुज्ञानको संज्ञा दिइएको छ ।[116]

## ८.५. रत्नसम्भव तथागत

दक्षिणाभिमुख गरेको रत्नसम्भव पञ्चतथागतहरुमा एक हुन् । रत्नसम्भव तथागत बारे बौद्ध तन्त्र ग्रन्थ र बौद्ध स्तोत्र संग्रहमा ठाउँ ठाउँमा वर्णन गरिएको भेटिन्छन् । रत्नसंभव तथागतको स्वभावलाई लिएर भनिएको छ -

[115] पूर्वोक्त टिप्पणी नं. १, पृ. ५० ।
[116] पूर्वोक्त टिप्पणी नं. १, पृ. ९७ ।

*'रत्नानि प्रभवन्त्येव बुद्धादिनि यतो ध्रुवम् ।*
*ज्ञानं सत्वार्थ संयुक्तं रत्नसम्भवमुच्यते ॥'*[117]

(ज्ञा.सि. १५.७)

अर्थात्,

बुद्धादिहरुको लागि रत्नसमान हितार्थ ज्ञानले युक्त रत्नसम्भव हुनुहुन्छ । दक्षिण दिशामा अवस्थित रत्नसम्भव तथागत त्राँकार वीजाक्षरबाट उत्पन्न भइ वरद मुद्रामा हुनुहुन्छ । बोधिरत्न स्वरुप रत्नकुलका रत्नसम्भव पृथ्वीतत्वको प्रतीक स्वरुप पीतवर्णको हुनुहुन्छ । वहाँको वाहन अल्छि नभई लक्ष्यपूर्ण गर्ने प्रतिकको रुपमा घोडा हो र उहाँको प्रमुख बोधिसत्वमा रत्नपाणि हो । सत्वप्राणीमा समता राख्ने ज्ञानको रुपमा उहाँको ज्ञान समताज्ञान कहलिन्छ ।

रत्नसम्भवको बारेमा बौद्ध स्तोत्र संग्रहमा यसरी वर्णन गरिएको छ-

*'दक्षिण रत्नसम्भव रत्नपाणि महातेजाः ।*
*तुरंगवाहन सम्पूर्ण पीतवर्ण नमोस्तुतेः ॥३॥'*[118]

महातेजवान रत्नपाणि साथ दक्षिण दिशामा अवस्थित पीतवर्ण, अश्व वाहन गरेको रत्नसम्भवलाई नमस्कार छ ।

त्यस्तै एउटा अर्को बौद्ध स्तोत्रमा त्राँकार वीजाक्षरबाट उत्पन्न पीतवर्णको रत्नसम्भव घोडा आसन गरी वरद मुद्रा धारण गरी दक्षिण दिशामा वस्नुहुन्छ भनि वर्णन गरिएको छ-

*'त्राँकारोत्पन्न हेमाभं दक्षिणेऽश्वमारुढम् ।*
*वरदमुद्रया युक्तम् नमामि रत्नसम्भवम् ॥'*[119]

## ८.६. समताज्ञान

'समताज्ञान' सबैलाई समभाव राख्ने ज्ञान हो । यो ज्ञानको बारेमा पनि विभिन्न बौद्ध ग्रन्थादिमा वर्णन छ । समस्त जगत स्वप्नवत् कल्पना गरेको र ऐनामा देखिने प्रतिबिम्ब जस्तो मात्र हो भनि अहंकार ममकार रहित शून्यताको भावना नै 'समताज्ञान' हो ।[120] अर्थात् सर्वधर्म नैरात्म्यको भावना

---

[117] पूर्वोक्त टिप्पणी नं. १७, पृ. १३७ ।
[118] पूर्वोक्त टिप्पणी नं. ९६ ।
[119] पूर्वोक्त टिप्पणी नं. ९५ ।
[120] पूर्वोक्त टिप्पणी नं. ११, पृ. (ट) ।

नै 'समताज्ञान' हो । यो ज्ञान उत्पन्न भएपछि समस्त प्राणीहरु र आफू बिच कुनै भेदभाव नभई एकै हो, समान नै हो भन्ने बोध हुन्छ । त्यसैले ज्ञानासिद्धि ग्रन्थमा यहिं कुरालाई लिएर भनिएको छ-

*'सर्वताथागतं ज्ञानमात्मीयं प्राणीनामपि ।*
*एकस्वभावसम्बोधौ समताज्ञानमुच्यते ॥'*[121]
(ज्ञा. सि. १.५०)

समताज्ञानको स्वरुपलाई लिएर मूलतन्त्रमा पनि बताएको छ-

*'सर्वभावसमो भूत्वा भावोऽक्षरः स्थितः ।*
*अक्षरज्ञानसम्भूतो नोच्छेदो न च श्वाश्वतः ॥'*[122]

अर्थात,

सबै वस्तुहरुमा समता अथवा एकत्वको भाव उत्पन्न भएपछि सबैनै एक भाव अक्षरमा स्थित हुन्छ । यो अक्षरज्ञान न शाश्वत न उच्छेद अर्थात् न सदा रहिरहने हो न नरहने नै हो ।

त्यस्तै महायान सूत्रलंकारमा पनि समताज्ञानको बारेमा भनिएको छ-

*'सत्वेषु समताज्ञानं भावनाशुद्धितोऽमलम् ।*
*अप्रतिष्ठितशमाविष्टं समताज्ञानमिष्यते ॥'*[123]
(म.सू. ९.७०)

अर्थात् ,

समस्त प्राणीहरु प्रति जुन समताज्ञान हुने हो, त्यसमा उसले ( बोधिसत्वले) आ-नो भावना विशुद्धिद्वारा प्राप्त गर्दछ । बोधिप्राप्त गरेपछि उसले सर्वसत्वमा समताज्ञानको भावनाले मल रहित भई शुद्ध हुन्छ । अनि कतैपनि प्रतिष्ठित हुदैन् । यस्तो स्थितिको ज्ञानलाई नै 'समताज्ञान' भनिन्छ ।

यो ज्ञान आदर्शज्ञान पछि उदय हुन्छ । अर्थात् अक्षोभ्य तथागतको आदर्शज्ञान उत्पन्न भईसकेपछि अभ्यासरत योगीको मनमा समताज्ञान उदय हुन्छ ।

---

[121] पूर्वोक्त टिप्पणी नं. १७, पृ. ९७ ।
[122] पूर्वोक्त टिप्पणी नं. १, पृ. ९८ ।
[123] पूर्वोक्त टिप्पणी नं. १८, पृ. ४७ ।

समताज्ञान साक्षात्कार गर्न यस्को विपरित चरित मद्‌मात्सर्यलाई त्याग गर्नु पर्दछ । यो ज्ञानको मूल लक्ष्य बोधिचित्त उत्पन्न गरी सकल प्राणीहरु प्रति समताको भाव ल्याई सबैको भलो गर्ने तर्फ अग्रसर हुनु हो । यो ज्ञान आर्जन गर्न बोधिचित्त उत्पन्न गर्ने विषयमा बोधिचर्यावतार ग्रन्थमा सविस्तार वर्णन पाइन्छ ।

समताज्ञानको विषयमा आर्यमञ्जुश्रीनामसंगीतिमा गाथाको रुपमा २४ श्लोकले वर्णन गरिएको छ । नामसंगीतिको समताज्ञान गाथा पटलमा उल्लेखित उक्त श्लोकमा १०४ मन्त्राक्षर पदको व्याख्या गरिएको छ । समताज्ञानको विषयमा यस पटल अन्तर्गतको २४ वटै श्लोकमा बुद्धत्व प्राप्तिका लागि सर्वसत्व प्राणिहरु माथि समताभाव राख्नु पर्ने कुरा उल्लेख गरिएको छ । बोधिसत्वहरुले समताज्ञान कै आधारमा सबै प्रकारका अपाय दुर्गति सोध गरी सकेका हुन्छन् । त्यस्तै अज्ञान रुपी शत्रुलाई जीति परमार्थ ज्ञान, शून्यता ज्ञान आर्जन गरी लोक कल्याण तिर अग्रसर हुन सक्ने ज्ञान समताज्ञान हुन् भनि यी श्लोकहरुमा वर्णन गरेको पाइन्छ ।

नामसंगीतिको समताज्ञान गाथामा उल्लेखित श्लोकहरु मध्ये एक श्लोकमा समताज्ञान धारण पालन गर्नेलाई द्वादशाङ्गभव, द्वादशाङ्ग प्रतित्यसमुत्पाद, द्वादशाकार (द्वादश आयतन) शुद्ध भई चतुर्रार्यसत्य, अष्टज्ञान साक्षात्कार हुनेछ भनि वर्णन गरेको छ -

*"द्वादशांगभवोत्खातो द्‌वादशाकारशुद्धधृक् ।*
*चतुःसत्यनयाकार अष्टज्ञानावबोधधृक ॥१४॥*

(ना.सं. ८.१४) पृ.४२

त्यस्तै,

समताज्ञानको सम्वन्धमा नामसंगीतिकै अर्को एक श्लोकमा यसरी वर्णन गरिएको छ-

*'सर्वसत्वमनोऽन्तरस्थस्तच्चित्तसमतांगतः ।*
*सर्वसत्वमनोल्हादी सर्वसत्वमनोगतिः ॥२१॥'*

(ना.सं.८.११) पृ.४४

अर्थात्,

समताज्ञान भनेको सकलसत्वको चित्तसंग समान भएको सकलसत्वको चित्त आनन्दित पार्ने ज्ञान हो ।

त्यसैले यो ज्ञान जगतलाई नै फाईदा गर्ने, रागादि क्लेश सक्लेश आदि वास्ना रहित प्रज्ञोपाय, महाकरुणायुक्त ज्ञान हो । यसै भावलाई नामसंगीतिको समताज्ञान गाथामा यसरी वर्णन गरिएको छ

*'ल्केशोपल्केशसंक्लेश सुप्रहीनसवासन: ।*
*प्रज्ञोपाय महाकरुणा अमोघजगदर्थकृत् ॥१९॥*

(ना.सं. ८.१९) पृ.४३

हेतुज्ञान रुपी आदर्शज्ञान प्राप्त भईसकेपछि समताज्ञान प्रत्ययज्ञानको रुपमा उदय हुने ज्ञान हो ।[124]

**८.७. अमिताभ तथागत**

अमिताभ तथागतको रुपकायको रुपमा चैत्य, स्तुपको पश्चिम दिशामा मूर्ति स्थापना गरिएका हुन्छन् । शुद्धताको प्रतीक स्वरुप कमलको फूलमाथि विषशोधक स्वरुपी मयूर आसन गरी दृढताको स्वरुप वज्रासन गरी ध्यान मुद्रा धारण गरी रहनुहुने अमिताभ तथागत अग्नितत्वको प्रतीक रक्तवर्णको हुनुहुन्छ । ह्रिंकार वीजाक्षरबाट उत्पन्न अमिताभ तथागत सांसारिक क्लेशबाट अलिप्त स्वरुपको पद्मकुलका हुन । अमिताभ तथागतको ज्ञान 'प्रत्यवेक्षणा ज्ञान' हो । जुन गुणधर्म अनुसारको धर्मज्ञान हो ।

अमिताभ तथागतको स्वभाव असंख्य गुणकारकको रुपमा भएको सम्बन्धमा ज्ञान सिद्धि तन्त्रग्रन्थमा अमिताभको शब्दार्थ यसरी गरिएको छ-

*'अप्रतिष्ठितनिर्वाणमलिप्तं भवनिर्वृतौ ।*
*असंख्यगुणसंयोगाद् अमिताभ: स उच्चते ॥ ८ ॥'*[125]

(ज्ञा. सि. १५.८)

अर्थात्,

अप्रतिष्ठितनिर्वाण-निर्वाणमा प्रतिष्ठित नहुने, अलिप्त - भवसंसारबाट मुक्त हुनेमा अलिप्त, असंख्य- गुण सञ्चय भएकोले उहाँलाई अमिताभ भनिएको हो ।

अमिताभ तथागतको वीजाक्षर, वर्ण, आसन, दिशा र मुद्राको सम्बन्धमा बौद्ध स्तोत्रमा यसरी वर्णन गरिएको छ -

*'ह्रींकारोत्पन्न रक्ताभं पश्चिमे मयूरासनम् ।*
*ध्यानमूद्राधरं नाथम् अमिताभमुनिं नम: ॥४॥'*[126]

त्यसै गरी अर्को एक बौद्ध स्तोत्र संग्रह पुस्तकमा अमिताभको वर्ण वाहन, दिशा तथा बोधिसत्वको रुपमा पनि वर्णन यसरी गरेको पाइन्छ -

[124] पूर्वोक्त टिप्पणी नं. १, पृ. ९७ - ९८ ।
[125] पूर्वोक्त टिप्पणी नं. १७, पृ. १३७ ।
[126] पूर्वोक्त टिप्पणी नं. ९३ ।

*'पश्चिम अमिताभभव पद्मपाणि कृपावन्त ।*
*'मयूरवाहन सम्पूर्ण रक्तवर्ण नमोस्तुते ॥४॥'*[127]

८.८. प्रत्यवेक्षणा ज्ञान

प्रत्यवेक्षणा ज्ञान आदिशुद्ध, अनुत्पन्न तथा प्रभाश्वर ज्ञान हो । यस विषयमा आचार्य इन्द्रभूतिपादले ज्ञानसिद्धिमा भनिएको छ -

*'आदिशुद्धमनुत्पन्नं प्रकृत्यैव प्रभाश्वरम् ।*
*अन्योन्यव्यापक ज्ञानात् प्रत्यवेक्षणकं स्मृतम् ॥'*[128]

(ज्ञा. सि. १.५१)

अर्थात्,

आदिकालदेखि शुद्ध भएको अनुत्पन्न स्वभावको अर्थात् उत्पन्न नै नभएको स्वभावको उज्वल, प्रकृति प्रभाश्वरको परस्पर, व्यापक भएको ज्ञानलाई प्रत्यवेक्षणा ज्ञान भनी बुझ्नु । प्रत्यवेक्षणा ज्ञानलाई तथागत ज्ञान युक्तको रुपमा आचार्य पद्मवज्रले गुह्यसिद्धिमा यसरी प्रस्तुत गरेको छ ।

*'शुद्धमनाविलं यत् तत् सर्वताथागतान्वितम् ।*
*उच्यतेतु समासतज्ञानं तत् प्रत्यवेक्षणा ॥'*[129]

(गु. सि. ४.२५)

प्रत्यवेक्षणा ज्ञान आदिशुद्ध, अनुत्पन्न स्वभावको साथै यो ज्ञान सबै संज्ञात्मक वर्ण अकार कुलोत्पन्न पनि हो, जुन अकार सबै वर्णहरुमा अग्र छ । यो महाक्षरको ज्ञान प्राप्त भएपछि संज्ञा र संज्ञा गर्ने कुनै हुंदैन भनि मुलतन्त्रमा भनिएको छ -

*'सर्वसंज्ञात्मकावर्णा अकारकुलसम्भवाः ।*
*महाक्षरपदप्राप्ताः न संज्ञा न च संज्ञिनः ॥'*[130]

त्यस्तै प्रत्यवेक्षणाज्ञानको विषयमा आर्य असंगले महायान सूत्रालंकार ग्रन्थमा यो ज्ञान सर्वप्रकारको ज्ञेयहरुमा अव्याहत अर्थात् निर्वाध गति भएको

---

[127] पूर्वोक्त टिप्पणी नं. ९४ ।
[128] पूर्वोक्त टिप्पणी नं. १७, पृ. ९७ ।
[129] पूर्वोक्त टिप्पणी नं. १७, पृ. ।
[130] पूर्वोक्त टिप्पणी नं. १, पृ. ९८ ।

र सबै प्रकारको संशयहरु-संदेह, शंकाको विच्छेद गरी महाधर्म रुपी वर्षा वर्षिदिने खालको हो भनि यसरी वर्णन गरिएको छ-

*'प्रत्यवेक्षणकं ज्ञानं ज्ञेयेष्वव्याहतं सदा ।*
*धारणीनां समाधीनां निधानोपममेव च ॥ ६ ॥*
*परिषन्मण्डले सर्वविभूतीनां निदर्शकम् ।*
*सर्वसंशयविच्छेदि महाधर्मप्रवर्षकम् ॥ ७ ॥'*[131]

(म.सू. ९. ६,७)

आदर्शादि पञ्चज्ञानलाई आर्जन गर्न यसको विपरित चरितलाई पनि बुझ्नुपर्ने हुन्छ । अर्थात् रागादि क्लेशरुपी पञ्च चरितबाट पन्छिनु पर्दछ । नामसंगीतिको वज्रधातु महामण्डल गाथाको दुई श्लोकले पञ्चज्ञान स्वरुपी पञ्चतथागत- वैरोचन, अक्षोभ्य, रत्नसम्भव, अमिताभ, अमोघसिद्धिलाई क्रमशः मोह, द्वेष, राग तथा मात्सर्यकोलाई पञ्चचरितको रुपमा यसरी वर्णन गरिएको पाइन्छ-

*महामह महारागः सर्वसत्व रतिकरः ।*
*महामह महाद्वेषः सर्वक्लेश महारिपु ॥३॥*
*महामह महामोहो मूढधीमोहषूदन ।*
*महामह महाक्रोधो महाक्रोधरिपुर्महान् ॥४॥'*

(ना.सं. ५. ३,४) पृ. १३

माथि उल्लेखित पञ्चचरित मध्ये रागरतिको रुपमा अमिताभलाई लिइएको छ । अर्थात् अमिताभ तथागतको प्रत्यवेक्षणा ज्ञान आर्जन गर्न राग अर्थात् आशक्तिदेखि टाढा रहनुपर्ने, आशक्ति प्रहाण गर्नुपर्ने हुन्छ । रागलाई महारागले दमन गर्नु पर्दछ । यहाँ आशक्तिमा लिप्त नहुने महाराग भनेको बोधिचित्त हो । गुह्यसमाज तन्त्रमा उल्लेख भए अनुसार-रागले नै राग प्रहाण गर्ने अमिताभ तथागतको योग हो । सकल तथागतको महाराग भनेको परमानन्द हो । त्यहि परमानन्दबाट उत्पन्न भएको बोधिचित्तद्वारा उत्पन्न अमिताभ हुन् । यसबाट ज्ञात हुन्छ कि यो ज्ञान यथार्थ रुपमा बुझ्नका लागि बोधिचित्त उत्पत्ति गर्नु पर्दछ ।[132]

---

[131] पूर्वोक्त टिप्पणी नं. १८ पृ. ४७ ।

[132] पूर्वोक्त टिप्पणी नं. २०, पृ. २४ ।

प्रत्यवेक्षणाज्ञानलाई लिएर यसको स्वभावादिको बारेमा नामसंगीतिको प्रत्यवेक्षणा ज्ञान गाथामा ४२ श्लोक व्यक्त गरेको छ । ज्ञानकाय मञ्जुश्रीलाई परिलक्षित गरी वहाँको गुण वर्णन गरी नामसंगीतिको उक्त ४२ श्लोक मध्ये १४ औं श्लोकमा यसरी वर्णन गरेको पाउछौं-

*'गुणी गुणज्ञो धर्मज्ञः प्रसस्तो मंगलोदयः ॥*
*सर्वमंगलमांगल्यः कीर्तिलंक्ष्मीर्यशः शुभः ॥१४॥'*

(ना.सं. ९.१४) पृ. ३१

अर्थात्,

गुणलाई बुझ्ने गुणवान्ले धर्मलाई पनि बुझेको हुन्छ । त्यस्ता व्यक्तिसंग प्रशस्त मंगल उदय भएको हुन्छ अर्थात् सर्वमंगलमांगल्य भई नै रहन्छ र उसको कीर्ति, लक्ष्मी, यश, शुभ सदा भईरहन्छ ।

प्रत्यवेक्षणा ज्ञानको शुद्धताको बारेमा नामसंगीतिको प्रत्यवेक्षणा ज्ञान गाथाको श्लोक नं. २२ मा बताएको छ -

*'अरजो विरजो विमलो वान्तदोषो निरामयः ॥*
*सुप्रबुद्धोः विबुद्धात्मा सर्वज्ञः सर्ववित्पर ॥२२॥*

(ना.सं. ९. २२) पृ.३३

धूल रहित अर्थात् रागादि धूल नभएको, भित्र बाहिर पनि धूलरुपी फोहर नभएको, मल तथा दोष रहित भई निर्मल भइसकेको, शुद्धरुपले यथार्थ रुपले सबै बुझिनु पर्ने बुझिसकेको सर्वज्ञ अर्थात् तीनै यानको मार्गज्ञान बुझ्ने हुन्छ ।

त्यसैले यो ज्ञान जगत संसारकै एक विशाल छत्र अर्थात् तापले छतपटिरहेका प्राणीहरुलाई मैत्री करुणा मण्डल अर्थात् शरण दिने, तर संसारदेखि अलिप्त भैरहने तेजवान् स्वरुपी, त्रिरत्न रुपी छत्रले विभूषित भएको ज्ञानको अर्थमा भनिएको छ-

*जगच्छत्रैकविपुलो मैत्रीकरुण मण्डल ।*
*पद्मनर्त्तेश्वरः श्रीमान् रत्नछत्रो महाविभु ॥ २९ ॥*

(ना. सं. ९.२९)

अमिताभ तथागतको प्रत्यवेक्षणा ज्ञानको बारेमा यस्तै अन्य सान्दर्भिक गाथाहरु पनि नामसंगीतिमा प्रस्तुत गरिएको छ । यो ज्ञानको सन्दर्भमा नामसंगीतिको टीकाकार रविश्रीले यो ज्ञानलाई धर्म ज्ञानको रुपमा उल्लेख गरेको छ ।[133]

### ८.९. अमोघसिद्धि तथागत

अमोघसिद्धि तथागत उत्तर दिशामा रहनु हुन्छ । बौद्ध स्तोत्र संग्रहमा अमोघसिद्धिको दिशाको साथसाथै उनको प्रमुख बोधिसत्व तथा बाहनको बारेमा यसरी श्लोकबद्ध गरेको पाउँछौ -

*'उत्तरे अमोघसिद्धि विश्वपाणि विद्याधर ।*
*गरुड बाहन सम्पूर्ण श्यामवर्ण नमोस्तुते ॥५॥'*[134]

उत्तर दिशामा गरुड आसन गरी विद्याधर विश्वपाणिका साथ बस्नु हुने श्याम अर्थात् हरित वर्णको अमोघसिद्धि तथागतलाई नमस्कार ।

अमोघसिद्धिलाई लिएर ज्ञानसिद्धि तन्त्रमा यसरी शब्दार्थ गरिएको छ ।

*'सर्वसत्वार्थकार्याणां प्रसाधक तमःस्वयम् ।*
*अवन्ध्यं तन्महाज्ञानममोघसिद्धिरुच्यते ॥'*[135]

(ज्ञा. सि. १५.९)

अर्थात्,

सर्वसङ्खवको लागि कर्म गर्ने, कोशिस गरेर बन्धन रहित महाज्ञान लाभ गर्नेलाई अमोघसिद्धि भनि जान्नु ।

त्यस्तै गरी वज्रभैं अभेदन वा वज्र जस्तै दृढ भै सत्वहरुलाई उद्धार गर्ने, राजा तथा दीप जस्तो भएर कार्य गर्ने कृत्यानुष्ठानज्ञान रुपी अमोघसिद्धि हुनु हुन्छ भनी यसरी वर्णन गरेको पनि पाइन्छ-

*'वज्रवदभेदेन सत्वकृत्य लक्षणेन राजनाद्दिपनादिति ।*
*कृत्वा कृत्यानुष्ठानज्ञानरुपोऽमोघसिद्धि ॥'*[136]

---

[133] पूर्वोक्त टिप्पणी नं. ९, पृ. ९७ - ९८ ।
[134] पूर्वोक्त टिप्पणी नं. ९६ ।
[135] पूर्वोक्त टिप्पणी नं. १७, पृ. १३७ ।
[136] पूर्वोक्त टिप्पणी नं. २०, पृ. ।

अमोघसिद्धि तथागतको उत्पत्ति एवं अन्य ध्यानको बारेमा बौद्ध स्तोत्र संग्रहमा यसरी वर्णन गरेको छ-

*'खँकारोत्पन्न श्यामाभ्याम् उत्तरे गरुडासनम् ।*
*अभयमुद्रा संबुद्धममोघसिद्धि नमाम्यहम् ॥'*[137]

खँकारबाट उत्पन्न श्यामवर्ण अभय मुद्रांमा गरुडासन गरी उत्तर दिशामा रहनुहुने अमोघसिद्धिलाई नमस्कार ।

अमोघसिद्धि तथागत सम्बन्धी अन्य ज्ञान विवरणमा उहाँ सर्वत्र सुशिक्षित स्वरुपी विश्ववज्रकुलको हुनु हुन्छ । बाहनमा उहाँको अन्तरज्ञान दृष्टिको प्रतीकको रुपमा गरुडलाई लिइएको छ । त्यस्तै उहाँ निरन्तरताको प्रतीक वायुतत्वको रुपमा हरितवर्णको हुनुहुन्छ र भावनाज्ञान रुपी कृत्यानुष्ठान ज्ञान उहाँको ज्ञान हो ।

### ८.१०. कृत्यानुष्ठानज्ञान

अमोघसिद्धि तथागतको ज्ञान कृत्यानुष्ठानज्ञानलाई लिएर ज्ञानसिद्धि ग्रन्थमा यसरी उल्लेख गरिएको छ-

*'सर्वत्र सर्वदा सर्वं बुद्धकृत्यप्रवर्तनम् ।*
*सर्वबुद्धैककार्यत्वात् कृत्यानुष्ठानमुच्यते ॥'*[138]

(ज्ञा. सि. १.५२)

अर्थात्,

सर्वत्र सदा बुद्धहरुले गर्दै आउनुभएको चर्या प्रचार गर्नु पर्दछ, यहिं सबै बुद्धहरुको कार्य हो भनि बुद्धचर्यामा प्रस्थान गर्ने ज्ञानलाई 'कृत्यानुष्ठानज्ञान' भनिन्छ ।

नामसंगीतिको टीका मन्त्रार्थावलोकिनी तथा अमृतकणिका-नामसंगीति टिप्पणीमा कृत्यानुष्ठानज्ञानलाई शून्यता आर्जन गर्ने ज्ञानको रुपमा वर्णन गरिएको छ । दृढरुपले चर्या गर्ने, भावना गर्ने ज्ञानको रुपमा पनि लिइने यो ज्ञान प्रत्यवेक्षणाज्ञान उत्पन्न भएपछि प्राप्त हुने ज्ञान हो । अर्को अर्थमा धर्मज्ञान पछि उत्पन्न हुने भावनामयज्ञान नै कृत्यानुष्ठानज्ञान हो ।[139]

यो ज्ञानको स्वरुपको बारेमा मूलतन्त्रको 'पञ्चाकारज्ञान स्तव'मा यसरी भनिएको छ-

---

[137] पूर्वोक्त टिप्पणी नं. ९५ ।
[138] पूर्वोक्त टिप्पणी नं. १७, पृ. ९८ ।
[139] पूर्वोक्त टिप्पणी नं. १, पृ. ९८ ।

*अनुत्पन्नेषु धर्मेषु संस्काररहितेषु च ।*
*न बोधिर्नैव बुद्धत्वं न सत्वो नैव जीवितम् ॥*[140]

अर्थात,

अनुत्पन्न तथा संस्कार रहित धर्ममा न बोधि न बुद्धत्व भनेको नै हुन्छ, नत सत्त्वहरु तथा जीवहरु भन्ने नै हुन्छ ।

नामसंगीतिमा यो ज्ञानको बारेमा १५ श्लोक युक्त कृत्यानुष्ठानज्ञान गाथा वर्णन गरिएको छ । ती श्लोकहरु मध्ये एक श्लोकमा यो ज्ञान निर्माणकायको मूल स्वरुप तथा बुद्ध निर्माणको कारक भएको र यसले संसारलाई हित गर्दछ भनि यसरी वर्णन गरिएको छ-

*'निर्वाणकायकायाग्र्यो बुद्धनिर्माणवंशधृक् ॥*
*दशदिग्विश्वनिर्माणो यथावज्जगदर्शकृत् ॥५॥*

(ना. सं. ९.५) पृ. ४६

यसरी जगत हितको कारक ज्ञान भएको हुनाले यो ज्ञानलाई वन्दना तथा पूजा गर्न योग्य, नित्य मान्न योग्य, गुरु स्वरुपको ज्ञान हो भनि कृत्यानुष्ठानज्ञान गाथाको दशम श्लोकमा यसरी वर्णन गरिएको छ-

*'वन्द्यः पूज्योभिवाद्यश्च माननीयश्चनित्यशः ॥*
*अर्चनीयतमो मान्यो नमस्यःपरमो गुरु ॥१०॥*

(ना. सं. ९.१०)

कृत्यानुष्ठानज्ञान बुद्धचर्यामा प्रस्थान गर्नुपर्ने ज्ञान भएको हुनाले यसको लागि बोधिचित्तको अभ्यास जरुरी छ । यस्तै यो ज्ञानको विपरित चरित इर्ष्या, अल्सिपनाको रुपमा लिइन्छ । गुह्यसमाज तन्त्रमा यो ज्ञानको विपरित चरितको रुपमा इर्ष्या आदिको बारेमा वर्णन छ ।[141] ज्ञान आर्जन गर्न बाधाको रुपमा आउने इर्ष्या, कौशिद्य अर्थात् अल्सिपनालाई त्यागि कुशलकर्ममा निरन्तर लाग्नु सक्नुपर्नेछ ।

माथि उल्लेखित पञ्चज्ञान सम्बन्धी विविध व्याख्याको अतिरिक्त आचार्य विलासवज्रले नामसंगीतिलाई लिएर प्रस्तुत गरेको नाम मन्त्रार्थावलोकिनी

---

[140] पूर्वोक्त टिप्पणी नं. १, पृ. ९७ - ९८ ।
[141] पूर्वोक्त टिप्पणी नं. १७, पृ. ।

टीकामा . पञ्चज्ञान लाभ गर्ने सम्बन्धमा नामसंगीतिको प्रत्यवेक्षणा ज्ञानगाथाको २४ नं. श्लोक 'अनादिनिधनो बुद्ध ...' को व्याख्यामा भनिएको छ-

'बल प्रणितमादर्श ज्ञानम्, श्रद्धावीर्य स्मृति समाधि, प्रज्ञा वैशारद्य लक्षणं समताज्ञानम् । ज्ञान प्रहाण संक्लेश हेतूपदेशप्रतिसंवित्स्तभावं प्रत्यवेक्षणा ज्ञानम्, धर्म, अर्थ, निरुक्ति, प्रतिभा मैत्री करुणाकारं कृत्यानुष्ठान ज्ञानम् । सुविशुद्ध धर्मधातुज्ञान मिति एवं पञ्चज्ञानात्मक ष ॥'

अर्थात्,

श्रद्धादि पञ्चबलव्दारा लाभ हुने आदर्शज्ञान, श्रद्धादि इन्द्रियलाई उचित मात्रामा प्रयोग गरी बैशारद्य लाभ गर्ने द्वारा प्राप्त हुने समताज्ञान, ज्ञानक्लेश प्रहाण संक्लेशको कारण, उपदेश, चतुःप्रतिसम्बिद्द्वारा लाभ हुने प्रत्यवेक्षणा ज्ञान तथा चतुःप्रतिसम्विद् मैत्री करुणाद्वारा लाभ हुने ज्ञान कृत्यानुष्ठान ज्ञान हो । यी चारै ज्ञानलाभ भएपछि लाभ हुने ज्ञान सुविशुद्ध धर्मधातु ज्ञान हो ।

पञ्चज्ञानको सम्बन्धमा विभिन्न आचार्यहरुले व्याख्या गरेका अनेक ग्रन्थहरु पाइन्छ । ती मध्ये यहाँ केही तन्त्र ग्रन्थहरु तथा नामसंगीतिमा उल्लेखित पञ्चज्ञानको स्वरुप तथा त्यसको लक्षणलाई लिएर संक्षिप्त रुपमा मात्र प्रस्तुत गरेको हुँ ।

## अध्याय नौ
## उपसंहार

पञ्चतथागत ज्ञान वज्रयान बुद्धधर्मको विशिष्टम ज्ञान दर्शन हो । सत्व प्राणीको उद्धारणार्थ क्लेशावरण ज्ञेयावरण पूर्ण रुपमा निर्मूल गरी बुद्धत्व लाभ गर्नु यसको सिद्धान्त हो । यसको लागि बोधिचित्तोत्पत्ति गरी त्यसमा निरन्तर रुपमा भावनाद्वारा सर्वधर्म शून्यताको ज्ञान आर्जन गरी सत्व प्राणीहरुप्रति मैत्री करुणा राखी अघि बढ्नु पर्छ । वास्तबमा बुद्धधर्मको अन्तिम लक्ष्य भनेकै बुद्धत्व प्राप्त गर्न अभ्यासरत भई बुद्धज्ञान पञ्चतथागत ज्ञानलाई यथार्थ रुपमा अवबोध गर्नु हो । बुद्धत्वको मूल पञ्चतथागतको पञ्चज्ञान भएको हुनाले नै वज्रपाणिले (स्व पर हितार्थ) भगवान् बुद्ध समक्ष ती ज्ञानहरुको सम्बन्धमा प्रकाश पारिदिनु हुन प्रार्थना गर्नुभएको हो ।

बौद्धतन्त्रग्रन्थहरु मध्ये पञ्चबुद्धात्मक पञ्चज्ञानको मूल विषय समावेश भएको ग्रन्थ आर्य मञ्जुश्रीनामसंगीतिलाई अत्यधिक महत्व दिएको छ । विभिन्न बौद्ध देशहरु, विशेष गरेर महायानी वज्रयानी परम्परा भएको देशहरुमा यसको ठूलो प्रभाव छ ।

बौद्ध तन्त्रग्रन्थहरुमा नामसंगीति तन्त्रग्रन्थ एउटा सर्वमान्य ग्रन्थको रुपमा चिनिन्छ । यस ग्रन्थको अनुवाद अधिकांश भाषामा भई सकेको छ । अनेकन आचार्यहरुबाट अत्याधिक टीकाहरु मात्र होईन नामसंगीतिको साधना, मण्डल, अभिषेकादि बारे रचना भईरहेका अन्य थुप्रै ग्रन्थहरुबाट यो ग्रन्थ कतिको महत्वपूर्ण छ भन्ने कुरा सहजै अनुमान गर्न सकिन्छ ।

नामसंगीतिको महत्वलाई उजागर गर्दै आचार्य अनुपमवज्र तथा अद्वयवज्रले आदिकर्मिक बोधिसत्वहरुले पाठ नगरी नहुने गाथा भनी उल्लेख गरेका छन् । यसैलाई ह्दयंगम गरी नामसंगीतिको पाठ गर्ने स्मरण गर्ने भावना गर्ने कार्यहरु बौद्ध समाजमा अत्याधिक रुपमा भएको हो । नामसंगीतिमा उल्लेखित ज्ञानलाई संधै स्मरण भई रहोस् भन्ने हेतुले नामसंगीतिको ग्रन्थ प्रकाशित गर्नु तथा यसलाई त्रिकाल पाठभई रहने संस्कृतिको बिकाश हुन गयो । नामसंगीतिको महत्व र यसको उपादेयता बारे जनमानसमा अत्यधिक प्रभाव भएको कारणले यसको व्यापक प्रचार भई यसको विभिन्न किसिमले विकासक्रममा पनि तिव्रता ल्याए ।

नेपालको बौद्ध संस्कृति नामसंगीतिसंग आवद्ध छ । यहाँ सम्पन्न गरिने प्रत्येक धार्मिक सामाजिक कार्यमा पञ्चज्ञानलाई सर्वोपर स्थान दिईन्छ । बौद्ध संस्कार अन्तर्गत गरिने चूडाकर्ममा पञ्चतथागतज्ञानलाई परिलक्षित

गरी यहाँ पञ्चबुद्ध अंकित चैत्यलाई पूजा गरी चैत्य अंकित शिलांकुश धारण गर्ने चलन छ । त्यस्तै अन्य पूजादि कार्यमा पनि गुरु वज्राचार्यहरुले पञ्चबुद्ध अंकित मुकुट तथा आजुहरुले चैत्ययुक्त टोपी एवं छत्र प्रयोग गरिरहेका हुन्छन् ।

बौद्ध धार्मिक कार्यहरु जस्तै दीक्षा, व्रत, उत्सव, जात्रा, सम्यक, नवदान, पञ्जदान आदि देखि लिएर संघभोजनादिमा समेत पञ्चबुद्ध अंङ्कित चैत्यलाई सर्वप्रथम पूजा गर्नुपर्ने परम्परा छ । साथै मृत्युसंस्कार, श्राद्धकर्ममा पनि चैत्य बनाई पूजा गर्ने परम्परा छ । यसका अतिरिक्त अन्य विभिन्न पूजामा पञ्चबुद्धको कुलबाट उत्पन्न देवी देवताहरुको आव्हान गरी भावनात्मक रुपमा समेत पूजा गर्ने चलन छ । चैत्य निर्माण गरी त्यसको परिक्रमा वा पूजा गर्नेमात्र होईन सवालाख सुवर्ण चैत्य बनाउने, घरको मूल प्रवेशद्वार होस् वा विहारको प्रवेशद्वारमा पञ्चबुद्धको मूर्ति राख्ने वा लेख्ने देखि लिएर दैनिक प्रयोगमा ल्याईने पूजाभाण्ड तथा अन्य घरायशी सरसामानहरुमा समेत पञ्चबुद्धात्मक पञ्चज्ञान दर्शनको प्रतीक कुनै न कुनै रुपबाट चित्रण गरिएका हुन्छन् । ज्योतिरुप श्रीस्वयम्भूधर्मधातु वागीश्वर उत्पत्तिको घटना संस्मरण हुने गरी सुकुण्डा, बत्ति (घ्यूदीप) तथा पाल्चाहरु निर्माण गरिन्छ भने विद्याको शुभारम्भ श्रीस्वयम्भूलाई स्मरण गर्दै 'नमोवागीश्वर' को उच्चारणबाट गरिन्छ । अर्को अर्थमा भन्ने हो भने नामसंगीतिमा सर्मपित भई सम्यक् आजिविका गुजार्दै अघि बढनु यहाँको जीवन शैली भई सकेको छ ।

आर्यमञ्जुश्रीनामसंगीति भन्नु नै ज्ञानकाय मञ्जुश्री हुन् । नामसंगीतिमा मञ्जुश्रीलाई 'सर्वबुद्ध महाचित्त सर्वबुद्धमनोगति सर्वबुद्धमहाकाय सर्वबुद्ध सरस्वतिको रुपमा सर्वतथागतज्ञानकाय, ज्ञानसत्व भनी उल्लेख गरिएको छ । अर्थात् मञ्जुश्री सर्वबुद्धको महाचित्त भई सबै बुद्धका चित्तमा रहने, सर्वबुद्धको महाकाय भएर सर्वबुद्धको वचनरुपी भई रहको छ ।

नामसंगीतिमा मायाजालाभिसम्बोधि नामको एक गाथामा भनिएको छ-

*' ॐ वज्रतीक्ष्णदुःखच्छेदप्रज्ञानमूर्तये ।*
*ज्ञानकायवागीश्वर अरपचनाय ते नमः ॥३॥*

यस श्लोकमा मञ्जुश्रीलाई वज्रसमान कडा भएको तृष्णारुपी दुःखच्छेदन गर्ने प्रज्ञाज्ञानका मूर्ति ज्ञानकाय वागीश्वर अरपचनको रुपमा वर्णन गरिएको छ । अर्थात् ज्ञानकाय, ज्ञानसत्व, ज्ञानमूर्ति, वागीश्वर भन्नुनै अरपचन वागीश्वर महामञ्जुश्री हुन् । जुन भन्नुनै नामसंगीति हो । यस

अर्थले उनी स्वयम्भू धर्मधातु वागीश्वर हुन्, पञ्चज्ञान हुन् र पूर्ण ज्ञान हुन् । यही पूर्णज्ञान लाभ गर्ने, स्वयम्भूज्ञान लाभ गर्ने वज्रसत्व हुन् ।

नामसंगीतिको ज्ञान अत्यन्त गम्भीर छ । यसको लागि कठोर परिश्रम तथा भावना ज्ञानको आवश्यकता पर्दछ । त्यसको लागि अभ्यासमा निरन्तरता दिनुपर्दछ ।

नेपालमण्डलका बौद्धहरु नामसंगीतिका ज्ञान आर्जन गर्नका लागि प्राचीनकालदेखि प्रयत्नरत नै छन् भन्नु पर्दछ । यहाँका विविध धार्मिक कार्यहरुमा नामसंगीतिलाई सर्वाधिक महत्व दिइ नामसंगीति वाचन गर्ने, श्रवण गर्ने परम्परालाई आजसम्म पनि निरन्तरता दिन सकेको नै यहाँको विशेषता मान्नु पर्दछ । नामसंगीति वाचन गर्न यहाँ थुप्रै नामसंगीति गाथा पुस्तकको संस्करण गर्नेलाई पनि धर्मकार्यको रुपमा लिइने चलन छ । आफ्नो स्वेच्छा तथा आफ्ना पूर्वज वा दिवंगतहरुका नामबाट उनीहरुको सुगतिको कामना गरी समेत ग्रन्थ प्रकाशन गरी धर्मदानको रुपमा वितरण गर्ने यहाँ धेरै मात्रामा पाइन्छ ।

महायानी वज्रयानी धर्मग्रन्थहरु मध्ये अति महत्वपूर्ण ग्रन्थहरुलाई यहाँ सुन चाँदीको मसि प्रयोग गरी नीलपत्रमा, विशेष गरी रञ्जना लिपि प्रयोग गरी ग्रन्थ लेख्ने परम्परा छ । यहाँका बौद्ध समाजमा आर्यअष्टसाहश्रिका सतसाहश्रिका प्रज्ञापारमिता ग्रन्थरत्न जस्तै आर्यनामसंगीति ग्रन्थरत्न पनि सुन चाँदीको मसि प्रयोग गरी लेख्ने गरेको पाइन्छ । आ-नो निवास स्थानमा नामसंगीति ग्रन्थरत्न राख्ने कार्यलाई पवित्र मान्ने यहाँका बौद्धहरुको परम्परा भएको हुनाले प्रायः यहाँका बौद्धहरुको प्रत्येक घरमा नामसंगीति हरिताल कागजमा लेखाई वा लेखी स्थापना गरी वाचनको साथै पूजा पनि गर्ने चलन छ ।

हुन त नामसंगीति वाचन परम्परामा पहिलेको दाँजोमा अहिले कमि आएको महसुस हुन्छ । यहाँका बुढापाकाहरुका अनुसार पहिले प्रायः सबै बौद्ध विहार तथा घर घरमा समेत नामसंगीति पाठ गर्नलाई नित्याचारको रुपमा लिएकोमा गत ३०,४० वर्ष यता धेरै विहारहरुमा यसको परम्परा हराउन थालेका छन् । नामसंगीति वाचन गर्ने कार्यमा सबभन्दा व्यापक भएको ललितपुरका कतिपय बौद्धविहारहरुमा समेत यसको परम्परा लोप हुन थालेका छन् । गुंलाधर्मको एक महिनामा समेत वाचन गर्न कार्यमा धेरैले छाडेर ल्याएको पाइन्छ । कतै कतै त नामसंगीति पाठ गर्नु समेत विर्सिन थालेको समेत आभास आउँदछ । यसको प्रमुख कारणमा धेरै जसोले भौतिक सुख सुविधातिर बढी ध्यान दिई आध्यात्मिक पक्षमा कम महत्व दिएको स्पष्ट हुन्छ । हाम्रा पूर्वजहरुले जीवनको सार्थकता भौतिक सुख सुविधालाई

भन्दा आध्यात्मिक ज्ञानलाई बढी महत्व दिई विभिन्न धार्मिक कार्यक्रमहरुको तर्जुमा गरी सभ्यसमाजको निर्माणमा टेवा पुऱ्याएर गएका थिए । भौतिक सुख सुविधाले मात्र शान्ति असम्भव छ । जीवनको मूल लक्ष्यमा पुग्न, स्वस्थ्य समाजको निर्माण गर्न आध्यात्मिक शान्ति र मैत्री करुणा अति आवश्यक छ । जुन कुरालाई भगवान् बुद्धले विभिन्न समयमा उपदेश दिनुभई सम्यक मार्गमा अग्रसर हुन निर्देश गर्नुभएको स्पष्ट हुन्छ ।

नामसंगीति वाचन कार्यमा कमि आएको अर्को कारणमा यसमा उल्लेखित दर्शन ज्ञानलाई बुझ्न नसक्नु पनि हो । नामसंगीतिको प्रवचन गरी यसको महत्व जनमानसमा पुऱ्याउने कार्यहरु पहिलेको दाँजोमा अहिले नहुनु, यसको अर्थ र यसको उपादेयतालाई बुझाउने आचार्य विद्वानहरुको कमि हुन आदि कारणले गर्दा पनि पहिलेको तुलनामा कमि आएको देखिन्छ ।

जुनसुकै विषयमा प्रवेश गर्नका लागि सो विषयमा सबैको रुचिकर हुनुपर्दछ । अरुचि भएमा त्यसवाट टाढा हुनु मानविय गुण हुन् । त्यस्तै नामसंगीतिको विषयमा पनि धेरैले राम्ररी बुझ्न नसकेको र बुझ्ने कोशिस पनि नगरेकोले पनि वाचन कार्यमा जनसहभागितामा कमि आएको महसुस हुन्छ । तर विहार आदिमा यसको वाचन कार्य पश्चात् मात्र देवस्नान पूजादिको कार्य प्रारम्भ गरिने परम्परा भएबाट यसलाई चटक्कै छोडन भने सकेको छैन् । श्रद्धाको दृष्टिकोणले भंएपनि वाचन कार्यहरुमा खासगरी बढी संघ भएका विहारहरुमा आजसम्म निरन्तरता दिइआएको पाइन्छ । अतः नामसंगीति वाचन परम्परालाई निरन्तरता दिनका लागि समय समयमा प्रवचन, गोष्ठि, धर्मदेशनाको आयोजना गरी यसको महत्व जनमानसमा पुऱ्याउनु पर्ने देखिन्छ । साथै यसको महत्व एवं आवश्यकतालाई दृष्टीगत गरी यसको बारेमा अध्ययन अनुसन्धान गराइ सोको जानकारी प्रकाशमा ल्याउने कार्य गर्नुपर्ने देखिन्छ ।

**नामसंगीतिबाट हुने सकारात्मक प्रभाव एवं आफ्नो संस्कार-संस्कृति प्रति बौद्ध समाजलाई बोध गराउने कार्यमा पनि सम्बन्धित पक्षहरु लाग्नु पर्ने देखिन्छ । विशेष गरी यहाँका बौद्ध सिद्धान्त अनुसार-'बुद्धोभवेयं जगतो हिताय' को मूलमन्त्रलाई स्मरण गरी यहाँको समाजलाई बुद्धधर्मको यथार्थ ज्ञान दिने व्यवस्था मिलाएको खण्डमा नामसंगीतिको परम्परालाई निरन्तरता दिने कार्यमा अझ बढी जनसहभागीता पुग्ने निश्चित छ ।**

अस्तु ॥

# परिशिष्ट नं. १

तिब्बती त्रिपिटक पेकिङ्ग संस्करण (TTP) अन्तर्गतका नामसंगीतिका टीका ग्रन्थ र टीकाकारहरु

## १. टीकाग्रन्थ

१. अमृतकणिकानाम आर्यनामसंगीति टिप्पणी- (रविश्री)
- (TTP) Vol.48, Sr. NO. 2111

२. आर्यमञ्जुश्रीनामसंगीति अमृतविन्दुप्रत्यालोकवृत्तिनाम- (अनुपमरक्षित)
- (TTP. Vol.48, Sr. NO.2112)

३. आर्यमञ्जुश्रीनामसंगीतिव्याख्यान- (मञ्जुश्री निर्माणनरेन्द्रकीर्ति)
- (TTP. Vol. 48, Sr. NO. 2113)

४. आर्यमञ्जुश्रीनामसंगीतिटीका विमलप्रभा- (राजा पुण्डरीक)
- (TTP. Vol. 48, Sr. NO. 2114)

५. आर्यमञ्जुश्रीनामसंगीति स्वानुशंसावृति- (कीर्ति)
- (TTP. 48, Vol. Sr. NO. 2115)

६. आर्यनामसंगीत्यभिसमय- (अवलोकित)
- (TTP. 48, Vol. Sr. NO. 2116)

७. नासंगीतिवृत्तिनामार्थप्रकाशकरणदीपनाम - (विमलमित्र)
- (TTP. 67, Vol. Sr. NO. 2941)

८. आर्यमञ्जुश्रीनामसंगीति-अर्थालोककरनाम- (सुरतिवज्र)
- (TTP. 67, Vol. Sr. NO. 2942)

९. नामसंगीत्युपसंहारवितर्कनाम- (अद्वयवज्र)
- (TTP. Vol.67, Sr. NO. 2943)

१०. उपसंहारवितर्कसहिता संक्षिप्तनामार्थप्रद्दीपनाम- (प्रज्ञागुरु)
- (TTP. Vol.67, Sr. NO. 2944)

११. आर्यमञ्जुश्रीनामसंगीतिटीकानाम सारोपायिक- (अद्वयवज्र)
- (TTP. Vol.67, Sr. NO. 2945)

१२. नामसंगीतिवृत्ति- (मञ्जुश्रीमित्र)
- (TTP. Vol.74, Sr. NO. 3355)

१३. आर्यमञ्जुश्रीसंगीतिटीकानाम नाममन्त्रार्थावलोकिनी- (विलासवज्र)
- (TTP. Vol.74, Sr. NO. 3356)

१४. आर्यमञ्जुश्रीनामसंगीतिटीका- (मञ्जुश्रीकिर्ति)
- (TTP. Vol.74, Sr. NO. 3357)

१५. आर्यमञ्जुश्रीनामसंगीतिटीकावृत्ति- (चन्द्रभद्रकीर्ति)
- (TTP. Vol.75, Sr. NO. 3358)

१६. आर्यमञ्जुश्रीनामसंगीतिटीकावृत्ति- (अवधूतीपा)
- (TTP. Vol.75, Sr. NO. 3359)

१७. आर्यमञ्जुश्रीनामसंगीतिवृत्ति नामार्थप्रकाशकरणनाम- (अद्वयगुप्त)
- (TTP. Vol.75, Sr. NO. 3360)

१८. मञ्जुश्रीनामसंगीतिलक्षभाष्य- (स्मृतिज्ञानकीर्ति)
- (TTP. Vol.75, Sr. NO. 3361)

१९. आर्यनामसंगीत्युपदेशवृत्तिनाम- (कुमारकीर्ति)
- (TTP. Vol.75, Sr. NO. 3362)

२०. आर्यमञ्जुश्रीनामसंगीतिमहाटीकानाम- (चन्द्रगोमिन्)
- (TTP. Vol.75, Sr. NO. 3363)

२१. नामसंगीतिवृत्तित्रिनयप्रकाशकरणदीपनाम
-(TTP. Vol.75, Sr. NO. 3364)

२२. नामसंगीतिवृत्ति- (डोम्बी हेरुक)
- (TTP. Vol.75, Sr. NO. 3365)

२३. आर्यमञ्जुश्रीनामसंगीतिपञ्जिकासंग्रहनाम- (रत्नाकरगुप्त)
- (TTP. Vol.75, Sr. NO. 3366)

२४. आर्यमञ्जुश्रीनामसंगीतिगुह्यापनोपायिकावृति ज्ञानदीपनाम-(स्मृतिज्ञानकीर्ति)
- (TTP. Vol.75, Sr. NO. 3411)

२५. आर्यमञ्जुश्रीनामसंगीतिपञ्जिका-(माध्यमिकानन्द)
- (TTP. Vol.75, Sr. NO. 4831)

## २. परिवारग्रन्थ

नामसंगीतिलाई लिएर साधना, मण्डल, अभिषेकादि विषयसित सम्बन्धी अनेक लघु ग्रन्थहरु तन्युर संग्रहमा उपलब्ध छन । विवरणमा उल्लेख परेकाहरु मध्ये धेरै जसो आचार्य मञ्जुश्रीमित्रका ग्रन्थहरु छन् । उहा को साधना सम्बन्धी एक ग्रन्थ, भावना तथा उपदेश सम्बन्धी सात ग्रन्थ, मण्डलविधि सम्बन्धी १२ ग्रन्थ, होम सम्बन्धी २ वटा ग्रन्थ र अन्य अभिषेकादि सम्बन्धित ८ वटा ग्रन्थहरु पर्दछन् -

नामसंगीतिका साधना मण्डलादि सम्बन्धी ग्रन्थहरु यस प्रकारका छन्:-

### क. साधन सम्बन्धी ग्रन्थ

१. आर्यमञ्जुश्रीनामसंगीतिसाधन (TTP. Vol.67, Sr. NO. 2959)

२. आर्यमञ्जुश्रीनामसंगीतिसाधन-(मञ्जुश्रीमित्र) (TTP. Vol.67, Sr. NO. 3368)

३. आर्यमञ्जुश्रीनामसंगीतिसाधन-(महाअवधूतपाद)

(TTP. Vol.75, Sr. NO. 3427)

४. नामसंगीतिसाधन-(सिंहाचल)

(TTP. Vol.75, Sr. NO. 3341)

५. नासंगीतिसाधननाम-(प्रभाकर)

(TTP. Vol.75, Sr. NO. 3442)

६. नामसंगीतिनामसाधन-(धर्मकीर्ति)

(TTP. Vol.75, Sr. NO. 3443)

७. आर्यमञ्जुश्रीनामसंगीतिसाधननाम-(सोमश्री)

(TTP. Vol.75, Sr. NO. 3446)

८. आर्यनामसंगीतिसाधन

(TTP. Vol.80, Sr. NO. 4297)

९. आर्यमञ्जुश्रीनामसंगीतिसाधनोपायिका-(श्रीमद् वरबोधि)

(TTP. Vol.75, Sr. NO. 3406)

१०. आर्यमञ्जुश्रीनामसंगीतिसाधन गुह्यप्रदीपनाम-(प्रज्ञागुरु)

(TTP. Vol.75, Sr. NO. 3423)

११. आर्यमञ्जुश्रीनामसंगीतिसाधनोपायिका-(वज्रकर्मसिद्धि)

(TTP. Vol.75, Sr. NO. 3425)

१२. नामसंगीत्याम्नायेन सिद्धपूजाचक्रवरलब्धसाधन

(TTP. Vol.80, Sr. NO. 4295)

**ख) भावना र उपदेश ग्रन्थहरुः**

यस शिर्षक अन्तर्गतका ९ वटा ग्रन्थहरु मध्ये ७ वटा ग्रन्थ आचार्य मञ्जुश्रीमित्रद्वारा रचिएका हुन् । अरु दुई ग्रन्थ आचार्य श्रीमद्बरबोधि र शाक्यश्रीभद्रका हुन्-

१. नामसंगीति-अनित्यभावना

(TTP. Vol.75, Sr. NO. 3384)

२. नामसंगीत्यनुसारेण मध्यमेन्द्रियद्वादशप्रतीत्यसमुत्पादभावना

(TTP. Vol.75, Sr. NO. 3393)

३. नामसंगीत्यनुसारेण श्रेष्ठेन्द्रियतत्वभावना

(TTP. Vol.75, Sr. NO. 3394)

४. मञ्जुश्रीनामसंगीतिपठनोपदेश

(TTP. Vol.75, Sr. NO. 3394)

५. नामसंगीतिकुशलमुलपरिणामना

(TTP. Vol.75, Sr. NO. 3382)

६. नामसंगीति-अनित्यतासंसारोद्वेगोपदेश

(TTP. Vol.75, Sr. NO. 3385)

७. नामसंगीतिविषत्रयनिवारणोपदेश

(TTP. Vol.75, Sr. NO. 3386)

८. नामसंगीति-अध्ययनानन्तरभावना-(श्रीमद् वरबोधि)

(TTP. Vol.75, Sr. NO. 3407)

९. नामसंगीतिवचनोपदेश-(शाक्यश्री भद्र)

(TTP. Vol.75, Sr. NO. 3344)

ग) मण्डलविधि सम्बन्धी ग्रन्थ

यसरी नै नामसंगीतिका मण्डलविधि सम्बन्धी १६ वटा ग्रन्थहरु मध्ये आचार्य मञ्जुश्रीभित्रका मात्रै १२ वटा ग्रन्थहरु पर्दछन् र अरु चारवटा ग्रन्थहरु अन्इ आचार्यहरुले रचेका हुन् । जुन यस प्रकारका छन्:-

१. आर्यमञ्जुश्रीनामसंगीतिमण्डलविधिनाम

(TTP, Vol.75. Sr. NO. 3369)

२. आर्यमञ्जुश्रीनामसंगीतिमण्डलविधिनाम

(TTP, Vol.75. Sr. NO. 3370)

३. आर्यमञ्जुश्रीनामसंगीतिमण्डलविधिनाम

(TTP, Vol.75. Sr. NO. 3371)

४. आर्यमञ्जुश्रीनामसंगीतिमण्डलविधिनाम

(TTP, Vol.75. Sr. NO. 3372)

५. आर्यमञ्जुश्रीनामसंगीतिमण्डलविधिनाम

(TTP, Vol.75. Sr. NO. 3375)

६. आर्यमञ्जुश्रीनामसंगीतिमण्डलविधिनाम

(TTP, Vol.75. Sr. NO. 3374)

७. नामसंगीतिमण्डलविधि-आकाशविमलनाम

(TTP, Vol.75. Sr. NO. 3367)

८. नामसंगीतिमण्डलविधिकर्म

(TTP, Vol.75. Sr. NO. 3369)

९. नामसंगीतिविधिसूत्रपिण्डित

(TTP, Vol.75. Sr. NO. 3379)

१०. आर्यमञ्जुश्रीनामसंगीतिसर्वापायविशोधनमण्डलविधिनाम

(TTP, Vol.75. Sr. NO. 3402)

११. आर्यमञ्जुश्रीनामसंगीतिचक्षुर्विधिनाम

(TTP, Vol.75. Sr. NO. 3400)

१२. मञ्जुश्रीनामसंगीतिमहाबोधिशरीरविधिनाम

(TTP, Vol.75. Sr. NO. 3395)

१३. मञ्जुश्रीनामसंगीतिमण्डलविधिनाम-(शान्तिभद्र)

(TTP, Vol.75. Sr. NO. 3322)

१४. आर्यमञ्जुश्रीनामसंगीतिमण्डलोपायिका-(सोमश्री)

(TTP, Vol.75. Sr. NO. 3347)

१५. आर्यमञ्जुश्रीनामसंगीतिसर्वमण्डलस्तोत्र- (सोमश्री)

(TTP, Vol.75 Sr. NO. 3348)

१६. आर्यमञ्जुश्रीनामसंगीतिचक्षुर्विधिनाम-(स्मृतिज्ञानकीर्ति)

(TTP, Vol.86. Sr. NO. 4835)

घ) होमविधि सम्बन्धी ग्रन्थ

यस शिर्षक अन्तर्गतका ३ वटा ग्रन्थ मध्ये २ वटा आचार्य मञ्जुश्रीमित्रका ग्रन्थ पर्दछन्। जुन यस प्रकारका छन् -

१. आर्यमञ्जुश्रीनामसंगीतिहोमविधिसंग्रहनाम -

(TTP. Vol. 75. Sr. NO. 3375)

२. आर्यनामसंगीतिसर्वापायविशोधनहोमविधिनाम -

(TTP. Vol. 75. Sr. NO. 3403)

३. आर्यनामसंगीतिहोमकर्म - (श्रीमद्बरबोधि) -

(TTP. Vol. 75. Sr. NO. 3408)

ङ) अभिषेकादि विषयक ग्रन्थ

यस शिर्षक अन्तर्गतका ९ वटा ग्रन्थ मध्ये ८ वटा आचार्य मञ्जुश्रीभित्रका ग्रन्थ पर्छन्। जुन यस प्रकारका छन्-

१. आर्यमञ्जुश्रीनामसंगीति-अभिषेकविधि

(TTP. Vol. 75. Sr. NO. 3396)

२. नामसंगीति-तर्पण

(TTP. Vol. 75. Sr. NO. 3376)

३. नामसंगीति-आसनयोग

(TTP. Vol. 75. Sr. NO. 3377)

४. नामसंगीति-भूतबलि

(TTP. Vol. 75. Sr. NO. 3378)

५. नामसंगीति-प्रदक्षिणाक्रियायोग

(TTP. Vol. 75. Sr. NO. 3380)

६. मञ्जुश्रीनामसंगीति-सप्ताङ्गसम्भारोपाय

(TTP. Vol. 75. Sr. NO. 3381)

७. मञ्जुश्रीनामसंगीति-प्रणिधानकर्मनाम,

(TTP. Vol. 75. Sr. NO. 3397)

८. मञ्जुश्रीनामसंगीति-मारमन्त्रचक्र

(TTP. Vol. 75. Sr. NO. 3401)

९. मञ्जुश्रीनामसंगीति-चक्रकम (अज्ञात)

(TTP. Vol. 75. Sr. NO. 3424)

## सन्दर्भ ग्रन्थहरु


### संस्कृत ग्रन्थहरु

१. आचार्य विलासवज्र:
*अर्यमञ्जुश्रीनामसंगीति टीका-नाममन्त्रार्थावलोकिनी,*(अप्र.), हेराकाजी वज्राचार्य संग्रहबाट ।

२. उपाध्याय, प्रा. जगन्थान (सं. तथा टिप्पणीकार):
*विलमप्रभा: कालचकतन्त्रराज टीका भाग १-३, भोट भारतीय ग्रन्थमाला-११,* केन्द्रय उ.ति.शि. संस्थान, सारनाथ, १९८६, १९९४ ।

३ उपाध्याय, प्रा. जगन्थान तथा द्विवेदी, ब्रजवल्लभ (सं.)
*धी १ के, के.उ.ति.शि.सं.,* सारनाथ, वाराणसी, १९८६ ।

४. चक्रवर्ती, प्रा. चिन्ताहरण (सं.):
*गृहयसमाजप्रदीपोद्योटनटीका षट्कोटी व्याख्या),* भोटदेशीय संस्कृत ग्रन्थमाला-२५, काशीप्रसाद जायसवाल अनुशीलन संस्था, पटना, १९८४ ।

५ द्विवेदी, प्रा. ब्रजवल्लभ तथा शाशनी, ठिनलेराम (सं.)
*बौद्ध तन्त्र कोष-भाग १, के.उ.ति.शि.सं.,* सारनाथ, वारायासी, १९९० ।

६. डा बनारसिलाल (सं.)
*आर्यमञ्जुश्रीनामसंगीति-अमृतकणिका टिप्पणी तथा अमृतकणिकोद्योटन निबन्ध सहित,* भोट भारतीय ग्रन्थमाला-३०, केन्द्रीय उच्च तिब्बती शिक्षा संस्थान, सारनाथ, वाराणसी, १९९२ ।

७. भट्टाचार्य, विनयतोष (सं.)
*साधनमाला भाग १,२* : ओरियन्टल इन्स्टीच्यूट, बरौदा, १९६८ ।

८. रिनपोछे, एस, तथा पाण्डेय जनार्दन, (सं.)
*धी २५,* के.उ.ति.शि.सं., सारनाथ, वाराणसी, १९९८ ।

९. रिनपोछे, एस., बहुलक, एस, एस. (सं.)
*धी १७,* के.उ.ति.शि.सं., सारनाथ, वाराणसी, १९९४ ।

१०. रिनपोटे, प्रा. सद्दोङ तथा द्विवेदी, प्रा. व्रजवल्लभ (सं.)
*गुहयादि अष्टसिद्धि संग्रह,* केन्द्रीय उच्च तिब्बती शिक्षा संस्थान, सारनाथ, वाराणसी, १९८७ ।

११. बज्राचर्या. पं दिव्यवज्र (सं.) :
*अद्वयपरमार्था नामसंगीति,* भूषण प्रकाशन, वि.सं.२०२९ ।

१२. वज्राचार्य, बद्रीरत्न (सं.) :
*धर्मसंग्रह,* बजाचार्य संरक्षण गुठी, काठमाडौं, २०५१ ।

१३. वज्राचार्य, हेराकाजी (सं.)
*सद्धर्मपाठ संग्रह,* ललितपुर २०५८ ।

१४. शास्त्री, स्वामी द्वारिकादास (सं.)
*महायानसुत्रालंकार,* बौद्ध भारती, वाराणसी, १९८५ ।

१५. शास्त्री, स्वामी द्वारिकादास (सं.)
*श्रीगुहयसमाजतन्त्रम्,* भारती प्रकाशन, वाराणसी, १९८४ ।

१६. शास्त्री, डा. हरप्रसाद (सं.)
*अद्वयवज्र संग्रह,* गायकवाड ओरियण्टल रिसर्च इन्स्टीच्यूट, बरौदा, १९२७ ।

१७. **बौद्ध स्तोत्र संग्रह** -अप्र.), हेराकाजी वज्राचार्यको संग्रहबाट ।

१८. **मध्ववैरोचन** - ***बौद्ध स्तोत्र संग्रह*** (अप्र.) हेराकाजी वज्राचार्यको संग्रहबाट ।

नेपालभाषा ग्रन्थ -मूल संस्कृत सहित)

१. भिक्षु धर्मसागर (अनु) :
*आर्यनामसंगीति अर्थ सहित*, काठमाडौं, २०२६

२. भिक्षु मञ्जुशासन (सं.) :
*महायान सूत्र धारणी पाठ विधि क्रम*, ललितपुर २०४७।

३. वज्राचार्य, महेन्द्रराज (सं.)
*आर्यमञ्जुश्रीनामसंगीति गाथा (प्रथम अध्येषणा निसें चतुर्थ मायाजालाभिसंबोधि तकया टीका सहित)* श्री धर्मधातु वाणीश्वर प्रकाशन मण्डल, काठमाडौं, २०४६।

४. वज्राचार्य, पं. रत्नबहादुर (अनु.)
*आर्यनामसंगीति थाना - अर्थ सहित*, ललितपुर ने.सं. १०७७।

५. शाक्य, मीनबहादुर (सं.)
*आर्यमञ्जुश्रीनामसंगीति-मूल पाठ अर्थ सहित*, नागार्जुन इन्स्टिच्यूट अफि बुद्धिष्ट स्टडिज, ललितपुर, १९९३।

६. शाक्य, हेमराज (सं.) :
*आर्यनामसंगीति -ताराशतनामस्तोत्र व आर्यभद्रचरी प्रणिधान सहित)*, काठमाडौं, वि.सं. २०४४।

अंग्रेजी भाषा

1. I) Bhattacharya, Benoytosh:
*Indian Buddhist iconography (Calcutta, 1958)*

II) Mane Therese de Mallman:
Etude Iconographque Sure Manjusri (Paris: Ecole Francaise d' Extreme orient, 1964)

2. Daris, T.W. Rays :
*Buddhism* (London, 1912)

3. (I) Davidson, Ronald :

*The Litany of Names of manjusri* (Tantric and Taoist Studies, vol.xx, Bruxelles 1981)

(II) Wayman, Alex:

*Chanting the Names of Manjusri,* (Shambhalal, Boston, London, 1985)

4. Gutschow, Neils :

*The Nepalese Chaitya 1500 years of Buddhist Votive Architecture in Kathmandu valley,* (London, 1970).

5. Mineav, I.P. (Ed.) :

*Histirio Philogical Faculty, vol. 16* (st. petersburg University, 1885).

6. Mukherji, Durga Das (Ed.) :

*Aryamanjusrinamasamgiti* (University of Calcutta, 1963)

7. Prof. Raghuvir (Ed.) :

*Shatapaitaka Series, vol. 18* (Internationl Academy of Indian Culture, New Delhi)

8. Prof. Ui, Hakuji, Prof. Suzuki, Munetade, Prof. Kanakura, Yenhho, Prof. Tokantada(comp.) :

*A Complete catalogue of teh Tibetan Buddhist Canon,* (Emperial University, Sendai, Japan, 1934)

9. B. Nanjio :

*A Complete Catalogue of Chinese Translation of Buddhist Tripitaka,* p. 227-306, records No. 1032.

१. डिक्लेर, ह्यूवर्ट :
*स्वयम्भू पुराण सम्बन्धि निगू प्रकरण : धर्ममित्र सु ख:, शान्तिकराचार्य सु ख: ? :* नेपालमण्डलया बौद्ध संस्कृति सम्मेलन प्रतिवेदन, १११९, सं. प्रा. डा. वज्रराज शाक्य, लोटस रिसर्च सेन्टर, महापाल, २०५६ ।

२. वज्राचार्य, पं. दिव्यवज्र (सं.)
*धर्मसंग्रह कोष,* काठमाडौं, २०३६ ।

३. वज्राचार्य, हेराकाजी :
*यशोधर महाविहार संघ, बुबहाल,* ललितपुर, २०५० ।

४. शाक्य, हेमराज (सं.)
*आर्यनामसंगीति-संक्षिप्त परिचय,* ललितपुर ।

५. शाक्य, हेमराज :
*यशोधर महाविहार स्थित मञ्जुश्रीया छ्वगू इतिहास, बुबाहा:,* वि.सं. २०५० ।

६. शाक्य, हेमराज :
*चैत्यया आत्मकथा* ललितपुर, २०५० ।

७. शाक्य, हेमराज :
*स्वयम्भू महाचैत्य,* स्वयम्भू विकास मण्डल, काठमाडौं, ने.सं. ११९८

८. राजभोगमाला वंशावली, प्राचीन नेपाल, सं. ८ ।

# शब्द संकेत सूची

१) अ.व.स. अद्वय वज्र संग्रह

२) गु.अ.स. गुह्यादि अष्टसिद्धि संग्रह

३) गु.स.प. गुह्य समाज प्रदिपद्योटन टीका

४) गु.सि. गुह्य सिद्धि

५) ना.स. नाम संगीति

६) म.सु. महायान सूत्रालंकार

७) हे.त. हेवज्र तन्त्र

८) ज्ञा.सि. ज्ञानसिद्धि

## आर्य नामसंगीति धारणी

नामसंगीति विख्यातं, क्लेश व्याधि महारिपू ।
दुर्गति मग्न सत्वानां दु:खच्छेदं नमाम्यहम् ।।



**स्व. पं. हेराकाजी बज्राचार्य**

**जन्म**

ने. सं. १०७२ फाल्गुण कृष्ण दशमी

**स्वर्गारोहण :**

ने.सं. ११२७ आषाढ शुक्ल तृतीया

**ठेगाना**

यशोधरा महाविहार
बुबहाल, त:ज:, धपगाल ।

**माता/पिता**

मोतिमाया बज्राचार्य
तथा
बज्रराज बज्राचार्य

## प्रकाशित कृतिहरु

१) युवक बौद्ध मण्डल, नेपालया गतिविधि व बौद्ध न्हयस: लिस: (हेरारत्न शाक्यसँग सम्पादन) ने.सं. ११११ ।

२) यशोधर महाविहार सघ: छगू अध्ययन - ने.सं. १११३

३) गुरुमण्डलाचर्न पूजाविधि पुस्तकम् (सम्पादन) ने.सं. १११३

४) नेवा:बौद्ध परम्पराया पूजा क्रियाय् छ्यला नाला वयाच्वंगु हलं ज्वलं व चर्यानृत्यया बव्ज्या । ने.सं. १११५

५) सम्वरोदय दशमी (दिशी) पूजाविधि पुस्तकम् (सम्पादन) - ने.सं. १११६

६) गुइत:या बहि विहार - संक्षिप्त परिचय ने.सं. ११२१

७) यलया बौद्ध विहार - संक्षिप्त परिचय ने.सं. ११२१

८) सद्धर्म पाठ संग्रह (सम्पादन) ने.सं. ११२१

९) नित्यस्नानार्चन विधि पुस्तकम् ने.सं. ११२२

१०) सप्तपुर महाविहार व आर्यश्रीवसुन्धरादेवीया परिचय - ने.सं. ११२२

११) आर्यश्रीग्रहमातृकानाम धारणी (सम्पादन) ११२२

१२) आर्यश्रीवसुन्धरादेवी व्रतविधान ने.सं. ११२४

१३) त्रि-समाधि पूजाविध पुस्तकम् (सम्पादन) ने.सं. ११२५


ISBN 9937-2-2834-4
9789937228343